

नेपाल सरकार

# संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय

(प्रशासन शाखा)

पत्र सँख्या : २०७७/७८
चलानी नं: ८८१

सिंहदरबार,काठमाण्डौ
मितिः २०७७/०६/२०

विषयः सूचना सम्बन्धमा।

श्री रुक्शना कपाली,
ललितपुर महानगर-१६, ललितपुर ।

प्रस्तुत विषयमा तपाईले संविधानको धारा २७ तथा सूचनाको हक सम्बन्धी ऐन, २०६४ को दफा ३ र ७ अनुसार मन्त्रिपरिषद्को "नेवारी भाषा" को सट्टा "नेपाल भाषा" भन्नुपर्ने निर्णयको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिन यस मन्त्रालयमा पेश गर्नुभएको निवेदन प्राप्त भई अवगत भयो ।
तपाईले यस मन्त्रालयमा पेश गरेको कागजपत्रको आधारमा उक्त निर्णय वि.स. २०५२ साल को आसपास भएको तर यस मन्त्रालयलाई वि.स. २०५७ साल देखि संस्कृति क्षेत्रको समेत कार्य गर्ने गरी जिम्मेवारी तोकिएको देखिन्छ । अतः वि.स. २०५७ साल भन्दा अघि संस्कृतिसँग सम्बन्धित अभिलेख यस मन्त्रालय नरहेको व्यहोरा यस मन्त्रालयको मिति २०७७/०६/१९ को निर्णय (श्रीमान् सचिवस्तर) अनुसार अनुरोध छ ।

वोधार्थः
श्री राष्ट्रिय सूचना आयोग ।

2077/06/20

प्रविनहाङ योङहाङ
शाखा अधिकृत

स्वस्थ र सक्षम निजामती प्रशासन : समृद्धि र सुशासन ।
फोनः ४२११५९६ फ्याक्स : ४२११७५८ ईमेलःinfo@tourism.gov.np वेवसाईटः www.tourism.gov.np सिंहदरबार, काठमाण्डौ ।

२३ । नेपाल भाषा नामको औपचारिक पुनःस्थापना सम्बन्धी सूचनाको हकद्वारा प्राप्त मन्त्रीपरिषद्को निर्णय: रुक्शना कपाली





२४। नेपाल भाषा नामको औपचारिक पुनःस्थापना सम्बन्धी सूचनाको हकद्वारा प्राप्त मन्त्रीपरिषद्को निर्णयः रुक्शना कपाली



RD771437080NP
**Lalitpur DPO (44700)**
**Letter (RD771437080NP)**
**From:**rukshana kapali
Lalitpur, -
**To:**sanskriti paryatan nagarik uddyan mantralaya
Kathmandu, -
**Weight:** 10.00 Grams **Cash: Rs.**28.00
**Date:**10/19/2020 Time: 10:31 AM
**OP:**nirmalac

**नेसं ११४१ कछला १**

कार्यालय प्रमुखजु,
संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय,
सिङ्घदरबार, काठमाडौँ

**विषय: सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भन्ने बारे भनी यस मन्त्रालयको सूचना अधिकारीलाई पठाएको निवेदनको जवाफ चित्त नबुझेकाले सत्य तथ्य के हो जानकारी पाउँ।**

महोदय, उपरोक्त सम्बन्धमा मैले सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भनी हुलाकद्वारा पाठाएको पत्र यहाँलाई प्राप्त भई च.नं. २८९ रहेको पत्र मिति २०७७/०६/२० द्वारा पठाइएको जवाफ चित्त बुझेन। मिति २०७७/०३/१७ सु.स.वै. / ५१२ / ७३६३ द्वारा प्रधानमन्त्री तथा मन्त्रीपरिषद कार्यालयले पठाएको पत्र अनुसार उक्त सूचना यही मन्त्रालयसँग सम्बन्धित रहेको जानकारी गराइएको छ। तहाँको च.नं. २८९ (२०७७/०६/२०) द्वारा प्राप्त पत्र अनुसार उक्त सूचना यस मन्त्रालयसँग नरहे कुन निकाय/मन्त्रालय/कार्यालयसँग रहेको व्यहोरा पनि खुलाइदिनहुन अनुरोध गर्दछु।

**निवेदक,**
रुक्शना कपाली
rukshana.newa@gmail.com
9808262699
नमुना टेलर्स, पतको, पाटन, ललितपुर महानगर - १६, ललितपुर


RD773258355NP
Lalitpur DPO (44700)
Letter (RD773258355NP)
From:rukshana kapali
Lalitpur, -
To:saskriti prayatan tatha nagarik uddyan mantralaya
Kathmandu, -
Weight: 110.00 Grams Cash: Rs.53.00
Date:2/2/2021 Time: 12:52 PM
OP:sunubohlip


RD773258320NP
Lalitpur DPO (44700)
Letter (RD773258320NP)
From:rukshana kapali
Lalitpur, -
To:pradhanmantri mantri parisad office
Kathmandu, -
Weight: 110.00 Grams Cash: Rs.53.00
Date:2/2/2021 Time: 12:52 PM
OP:sunubohlip

**नेपाल संवत् ११४१/०४/१६**

श्री कार्यालय प्रमुखज्यू,
संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय,
सिंहदरबार, यें (काठमाडौं) ।

श्री कार्यालय प्रमुखज्यू,
प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालय,
सिंहदरबार, यें (काठमाडौं) ।

<u>संयुक्त निवेदन</u>

**विषय : यस कार्यालयहरूमा सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गरेको सन्दर्भमा सत्य तथ्य के हो जानकारी पाउँ ।**

महोदय, उपरोक्त सम्बन्धमा म निवेदकले माथि सम्बोधित यी कार्यालयहरूमा सूचना माग गरि नेपाल संवत् ११४० देखि निवेदनहरू पठाउँदै आएको छु ।

१) नेपाल संवत् ११४० दिल्ला ३ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD765802314NP) प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालयका सूचना अधिकारीलाई सम्बोधन गरि पत्राचार गरेको थिएँ । उक्त पत्रमा मैले "सामाजिक संजालमा The Rising Nepal पत्रिकामा मिति 9 September 1995 र 14 November 1998 मा यस मन्त्रीपरिषदले 'नेवारी भाषा'को सट्टा 'नेपालभाषा' भन्नुपर्ने भनी निर्णय गरेको भन्ने बुझिएको हुँदा त्यस्तो कुनै निर्णय भएको छ कि छैन, र छ भने उक्त निर्णयको एक प्रति उपलब्ध गराईदिन हुन अनुरोध गर्दछु" भनि उल्लेख गरेको थिएँ । पत्रका साथै The Rising Nepal का ती news clippings हरू समेत समावेश गरेको थिएँ ।

२) मिति २०७७/०३/१७ उल्लेख भएको चलानी नम्बर सू.स.वै./५१२/६३६३ को पत्र मार्फत् प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालयका सूचना तथा वैदेशिक समन्वय शाखाका शाखा अधिकृतबाट मैले पठाएको पत्र मिति २०७७/०३/१६ मा प्राप्त भएको र सोही सम्बन्धमा मैले माग गरेको सूचना संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय सँग सम्बन्धित देखिएकोले सम्बन्धित मन्त्रालयबाट नै सूचना लिन आदेशानुसार अनुरोध गरिएको थियो ।

३) नेपाल संवत् ११४० दिल्ला १४ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD765950525NP) संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका सूचना अधिकारीलाई सम्बोधन गरि पत्राचार गरेको थिएँ । उक्त पत्रमा मैले "सामाजिक संजालमा The Rising Nepal पत्रिकामा मिति 9 September 1995 र 14 November 1998 मा यस मन्त्रीपरिषदले 'नेवारी भाषा'को सट्टा 'नेपालभाषा' भन्नुपर्ने भनी निर्णय गरेको भन्ने बुझिएको हुँदा त्यस्तो कुनै निर्णय भएको छ कि छैन, र छ भने उक्त निर्णयको एक प्रति उपलब्ध गराईदिन हुन अनुरोध गर्दै प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयलाई लेखिएको निवेदनको उत्तर मिति २०७७/०३/१७ मा प्राप्त भएकोमा उक्त सूचना यस मन्त्रालयबाट लिन आदेशानुसार अनुरोध गरिएको हुनाले यस मान्त्रालयबाट उक्त सूचनाको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन अनुरोध गर्दछु ।" भनि उल्लेख गरेको थिएँ । पत्रका साथै The Rising Nepal का ती news clippings हरू एवं र प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयबाट आएको पत्र समेत समावेश गरेको थिएँ ।

४) हुलाक Domestic Tracking मार्फत् हेर्दा उक्त पत्र मिति 7/7/2020 (मिति २०७७ असार २३) मै सिंहदरबार पुगिसकेको उल्लेख छ । तर त्यसको कुनै जवाफ नआएपछी नेपाल संवत् ११४० यंला २७ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD770810446NP) पुनः संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका सचिवलाई सम्बोधन गरि पत्र पठाएँ । उक्त पत्रमा मैले "सम्बन्धमा मैले मिति नेसं ११४० दिल्ला १४ उल्लेख गरिएको विषय सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भनी २०७७ असार २१ गते हुलाक कार्यालयबाट निवेदन पठाको र हुलाक कार्यालयको Domestic Tracking Website अनुसार असार २३ गते निवेदन सिङ्घ दरबारमा प्राप्त गरिसकेको देखाइएको तर आज भाद्र २९ (यंला २७) हुँदा सम्म पनि उक्त निवेदनको कुनै जवाफ न-आएकाले मेरो माग बमोजिमको सूचना प्रदान गर्न अनुरोध गर्दै यो निवेदन पेश गर्दछु ।" उल्लेख गरेको थिएँ । उक्त पत्र साथ मैले सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गरिएको ३) नेपाल संवत् ११४० दिल्ला १४ मिति उल्लेख भएको पत्रको फोटोकपी पनि समावेश गरेको थिएँ ।

ज्र२क्री

५) मिति २०७७/०६/२० उल्लेख भएको चलानी नम्बर २८९ को पत्र मार्फत् संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका प्रशासन शाखाका शाखा अधिकृतबाट जवाफ प्राप्त भयो । उक्त जवाफमा मैले पेश गरेको कागजपत्रका आधारमा उक्त निर्णय वि.सं २०५२ सालको आसपास भएको तर यस मन्त्रालयलाई वि.सं. २०५७ साल देखि संस्कृतिको क्षेत्रमा समेत कार्य गर्ने गरि जिम्मेवारी तोकिएको र वि.सं. २०५७ साल भन्दा अघि संस्कृति सँग सम्बन्धित अभिलेख यस मन्त्रालयमा नरहेको व्यहोरा उल्लेख गरिएको छ । तर मन्त्रालयको उक्त पत्रमा यस मन्त्रालयमा नरहे यो सूचना कताबाट लिन सकिन्छ भन्ने विषय उल्लेख गरिएको छैन ।

६) मैले पुनः नेपाल संवत् ११४१ कछला १ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD771437080NP) संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका कार्यालय प्रमुखलाई सम्बोधन गरि पत्राचार गरें । उक्त पत्रमा मैले "मैले सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भनी हुलाकद्वारा पाठाएको पत्र यहाँलाई प्राप्त भई च.नं. २८९ रहेको पत्र मिति २०७७/०६/२० द्वारा पठाइएको जवाफ चित्त बुझेन । मिति २०७७/०३/१७ सु.स.वै. / ५१२ / ७३६३ द्वारा प्रधानमन्त्री तथा मन्त्रीपरिषद कार्यालयले पठाएको पत्र अनुसार उक्त सूचना यही मन्त्रालयसँग सम्बन्धित रहेको जानकारी गराइएको छ । तहाँको च.नं. २८९ (२०७७/०६/२०) द्वारा प्राप्त पत्र अनुसार उक्त सूचना यस मन्त्रालयसँग नरहे कुन निकाय/मन्त्रालय/कार्यालयसँग रहेको व्यहोरा पनि खुलाइदिनहुन अनुरोध गर्दछु" भनि उल्लेख गरेको थिएँ । ४) हुलाक Domestic Tracking मार्फत् हेर्दा उक्त पत्र मिति 10/30/2020 (मिति २०७७ कार्तिक १४) मै सिंहदरबार पुगिसकेको उल्लेख छ । तर आज सम्म पनि उक्त पत्रको जवाफ आएको छैन ।

सूचना माग गरिएको विषयमा सूचना माग गर्नुको आधार गोरखापत्रका प्रकाशित समाचार हो । साल २०५२ भदौ २३ गतेमा "अब देखि नेपालभाषा" शीर्षको समाचारमा श्री ५ को सरकारले सरकारी सञ्चार माध्यमद्वारा प्रसारण गर्ने गरिएको "नेवारी भाषा" लाई अब देखि "नेपाल भाषा" भनि प्रशारण गर्नुपर्ने निर्णय गरिएको; प्रधानमन्त्री मनमोहन अधिकारीको अध्यक्षतामा त्रि.वि.वि शिक्षण अस्पताल

ज्र२क्री

महाराजगंजमा हिजो बसेको बैठकले सो निर्णय गरेको कुरा मन्त्रिपरिषद सचिवालयले जनाएको; रासस भनि उल्लेख छ ।

मैले फेरी पनि उपरोक्त सम्बोधित दुबै कार्यालयहरूलाई उक्त समाचारको clipping र गोरखापत्रबाट प्रमाणित समाचारको प्रति यसै पत्र साथ संलग्न गरेको पठाएको छु । यसका साथै माथि यस निवेदनमा बुँदागत उल्लेख गरिएका मैले पठाएका र मैले पाएका सबै निवेदनहरूको फोटोकपि पनि यसै पत्रसाथ संलग्न गर्दछु ।

मलाई उक्त सालमा भएको यस निर्णयको प्रमाणित प्रतिलिप उपलब्ध गरिपाउँ ।

यस कार्यालयहरूमा सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गरेको सन्दर्भमा सत्य तथ्य के हो ? गोरखापत्रमा प्रकाशित समाचारले मन्त्रीपरिषदको कार्यालयलाई इङ्गित गर्दछ । मन्त्रीपरिषदको कार्यालयको जवाफमा संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय इङ्गित गरिएको छ । संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयको जवाफमा कोही इङ्गित गरिएको छैन । यो सूचना वास्तवमा को सँग सम्बन्धित हो ? मैले कुन निकायमा यो सूचना लिनुपर्ने हो ?

निवेदक,

रुक्शना कपाली

पत्राचार गर्ने ठेगाना : नमुना टेलर्स, पतको टोल, ललितपुर महानगर वडा १६, ललितपुर जिल्ला ।

ईमेल ठेगाना : rukshana.newa@gmail.com

सम्पर्क नम्बर : 9808262699

मिति : नेपाल सम्बत ११४० दिल्ला ३




**Lalitpur DPO (44700)**
**Letter (RD765802305NP)**
**From:**rukshana kapali
Lalitpur, -
**To:**sanchar tatha suchana prabidhi mantralaya
Kathmandu, -
**Weight:** 10.00 Grams **Cash: Rs.**28.00
**Date:**6/24/2020 Time: 3:55 PM
**OP:**mmltp

श्री सूचना अधिकारीजु,
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय
सिङ्ह दरबार, काठमाडौं

**विषय: सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भन्ने बारे।**

महोदय,
उपर्युक्त सम्बन्धमा निम्न तपसिलमा उल्लिखित विवरण, तथ्याङ्क तथा सूचना मेरो व्यक्तिगत प्रयोजनको लागि आवश्यक परेको जानकारी गराउँदै उक्त सूचना नेपालको संविधानको धारा २७ तथा सूचनाको हक सम्बन्धि ऐन, २०६४ को दफा ३ र ७ अनुसार ती सूचना तथा जानकारीको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन यो निवेदन गर्दछु।

<u>तपसिल</u>

१) सामाजिक संजालमा The Rising Nepal पत्रिकामा १४ November १९९८ मा यस मन्त्रालयले "नेवारी भाषा"को सट्टा "नेपालभाषा" भनी आम सञ्चारलाई निर्देशन दिएको भन्ने बुझिएको हुँदा त्यस्तो कुनै निर्णय भएको छ कि छैन, र छ भने उक्त निर्णयको एक प्रति उपलब्ध गराईदिन हुन अनुरोध गर्दछु ।

The Rising Nepal को प्रकाशन भनी सामाजिक संजालमा व्यापक सयेर भएको उक्त news clippings हरू पनि यसै पत्र साथ संलग्न गर्दछु ।

**निवेदक,**
रुक्शना कपाली
rukshana.newa@gmail.com
9808262699
नमुना टेलर्स, पतको, पाटन, ललितपुर महानगर - १६, ललितपुर

**मिति : नेपाल सम्बत ११४० यंला २७**




श्री सचिव ज्यु,
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय,
सिङ्घ दरबार, काठमाडौँ

**विषय: सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भन्ने बारे भनी यस मन्त्रालयको सूचना अधिकारीलाई निवेदन पठाएको जवाफ नआएकाले सूचना प्रदान गरिपाउँ।**

महोदय,

उपरोक्त सम्बन्धमा मैले मिति नेसं ११४० दिल्ला ३ उल्लेख गरिएको विषय सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भनी २०७७ असार १० गते हुलाक कार्यालयबाट निवेदन पठाको र हुलाक कार्यालयको Domestic Tracking Website अनुसार असार १४ गते निवेदन सिङ्घ दरबारमा प्राप्त गरिसकेको देखाइएको तर आज भाद्र २९ (यंला २७) हुँदा सम्म पनि उक्त निवेदनको कुनै जवाफ न-आएकाले मेरो माग बमोजिमको सूचना प्रदान गर्न अनुरोध गर्दै यो निवेदन पेश गर्दछु।

सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गरिएको उक्त निवेदनको प्रति यसै पत्रसाथ संलग्न गरेको छु।

**निवेदक,**
रुक्शना कपाली
rukshana.newa@gmail.com
9828723192
नमुना टेलर्स, पतको, पाटन, ललितपुर महानगर - १६, ललितपुर



नेपाल सरकार

# सञ्चार तथा सूचना प्रविधि मन्त्रालय

(प्रेस तथा सूचना समन्वय शाखा)



सिंहदरबार, काठमाण्डौं

प.सं. ०७७/७८
च.नं. प्रेस-२२/९५

मिति:-२०७७।०६।०८

बिषय:- सूचना उपलब्ध गराईएको सम्बन्धमा ।

श्री रुक्शाना कपाली,
ललितपुर म.न.पा.-१६

प्रस्तुत विषयमा तपाई श्री रुक्शाना कपाली, ललितपुर - १६, सम्पर्क नं. ९८०८२६२६९९ ले मिति २०७७।०६।०६ गते यस मन्त्रालयको श्रीमान् सचिवज्यूलाई सम्बोधन गरी ईमेलमार्फत "The Rising Nepal" मा "नेवारी भाषा" लाई "नेपाल भाषा" भनी प्रकाशित समाचार सम्बन्धमा प्रमाणित विवरण पाउनका लागि निवेदन पेश गरेको सन्दर्भमा सो सँग सम्बन्धित विवरण पाना संख्या -४ (चार) मात्र रहेकाले नि:शुल्क उपलब्ध गराइएको व्यहोरा आदेशानुसार अनुरोध छ ।

२०७७/०६/०८

(कुमार थापा)
शाखा अधिकृत

<u>बोधार्थ</u>
श्री राष्ट्रिय सूचना आयोग,
देवीनगर, काठमाण्डौं।



# गोरखापत्र संस्थान

प्रकाशनहरू
गोरखापत्र (नेपाली दैनिक)
दि राइजिङ्ग नेपाल (अङ्ग्रेजी दैनिक)
मधुपर्क (नेपाली साहित्यिक मासिक)
युवामञ्च (नेपाली मासिक)
मुना बाल पत्रिका (नेपाली मासिक)
पत्रसंख्या :- ३८४०६६।०६८

धर्मपथ, काठमाडौं
नेपाल
पो.ब.नं. २३

मिति : २०७७।६।६

श्री प्रेस तथा सूचना समन्वय शाखा
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय
सिंहदरबार, काठमाडौं ।

विषय :- विवरण उपलब्ध गराइएको सम्बन्धमा ।

प्रस्तुत विषयमा तँहाको प.सं.०७७।७८, च.नं.प्रेस-२२/९३, मिति २०७७।६।४ को पत्र प्राप्त भई व्यहोरा अवगत भयो ।

सो पत्रमा माग भए बमोजमको 'नेवारी भाषा' लाई "नेपाल भाषा" भनी समाचार प्रकाशित गर्ने सम्बन्धीको तात्कालीन सञ्चार मन्त्री श्री राधाकृष्ण मैनालीज्यूले सरकारी संचार माध्यमहरुलाई गर्नु भएको निर्देशन सम्बन्धीको समाचार The Rising Nepal को 14 Nov, 1998 को वर्ष ३३ अंक ३२५ पृष्ठ १ र ७ मा प्रकाशित समाचारका प्रमाणित प्रतिलिपी यसैसाथ संलग्न राखी पठाइएको व्यहोरा अनुरोध गर्दछु ।

साथै उक्त समाचारको स्रोत राष्ट्रिय समाचार समितिको 13 Nov, 1998 मा प्रकाशित बुलेटिन भएको व्यहोरा अनुरोध गर्दछु ।

(कृष्णमुरारी भण्डारी)
कार्यकारी अध्यक्ष

फोन २२३१०२, २४४४३७, २२२२७८, २४४४३८, २२६५२९, २२७४९३, २२२९२१, २२२२७९, २४४४३५, २२५७६९, २२०८३५, २२२२५२, २२०६९९, २२०६३८, २२६३८३, फ्याक्स : २२४३८९, २२१७४८, २४४४२८



Rukshana Kapali <rukshana.newa@gmail.com>

## RTI for Rising Nepal

**Kumar Thapa** <kmr4481@gmail.com> Thu, Sep 24, 2020 at 4:58 PM
To: Rukshana Newa <rukshana.newa@gmail.com>, suchanadhikari@nic.gov.np
Cc: sangita ojha <sangitamoic@gmail.com>

Dear Sir/ Madam,
Please find the attachment & response it asap.

**3 attachments**

**Cover Page.pdf**
849K

**Gorkhapatra Sansthan.pdf**
4962K

**Last Page.pdf**
1489K



३४ । नेपाल भाषा नामको औपचारिक पुनःस्थापना सम्बन्धी सूचनाको हकद्वारा प्राप्त मन्त्रीपरिषद्को निर्णय: रुक्शना कपाली

मिति : नेपाल सम्बत ११४० अनला ८

श्री सूचना अधिकारी जु,
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय,
सिङ्घ दरबार, काठमाडौँ

**विषय: सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ।**

महोदय,

उपरोक्त सम्बन्धमा मैले सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भनी यहाँलाई पठाएको पत्रको आज पसं ०७७/७८, चनं प्रेस-२२/९५ मार्फत मैले सूचना प्राप्त गरेँ। मैले उक्त सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गर्दा कुन र कहिलेको निर्णय हो भन्ने सन्दर्भ पाइयोस् भनेर The Rising Nepal को समाचारको प्रति टाँस गरेको हुँ। मलाई आवश्यक रहेको सूचना यहाँले पठाए अनुसार सञ्चार मन्त्री श्री राधाकृष्ण मैनालीज्यूले सरकारी संचार माध्यमहरूलाई गर्नुभएको निर्देशन सम्बन्धी समाचारको प्रमाणित प्रतिलिपि होइन कि, उक्त निर्देशनकै प्रमाणित प्रतिलिपि प्राप्त गर्न खोजेको हो। सञ्चार मन्त्री श्री राधाकृष्ण मैनालीज्यूले सरकारी संचार माध्यमहरूलाई "नेवारी भाषा" नभई "नेपाल भाषा" भनी समाचार प्रकाशित गर्ने सम्बन्धीको निर्देशनको प्रति मेरो व्यक्तिगत अध्ययन प्रयोजनको लागि आवश्यक परेको जानकारी गराउँदै उक्त सूचना नेपालको संविधानको धारा २७ तथा सूचनाको हक सम्बन्धि ऐन, २०६४ को दफा ३ र ७ अनुसार ती सूचना तथा जानकारीको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन यो निवेदन गर्दछु।

**निवेदक,** रुक्शना

रुक्शना कपाली
rukshana.newa@gmail.com
9828723192
नमुना टेलर्स, पतको, पाटन, ललितपुर महानगर - १६, ललितपुर



**Rukshana Newa <rukshana.newa@gmail.com>**

## सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ ।

4 messages

---

**Rukshana Newa** <rukshana.newa@gmail.com> Thu, Sep 24, 2020 at 5:55 PM
To: Kumar Thapa <kmr4481@gmail.com>, suchanadhikari@nic.gov.np, sangita ojha <sangitamoic@gmail.com>

--
Rukshana Kapali (She, Her) ऋक्शना कपाली
Activist, Blogger, Writer ग्यासनामि, ब्लगन, ब्वमि
https://rukshanakapali1141.wordpress.com/

---

**Rukshana_RTI.pdf**
256K

---

**Kumar Thapa** <kmr4481@gmail.com> Fri, Sep 25, 2020 at 12:23 PM
To: Rukshana Newa <rukshana.newa@gmail.com>

Dear Stakeholder,
Thank you again for your mail.
We would like to inform you that it is better to ask in OPMCM (Office of the Prime Minister and Council of Ministers) for the further information because this ministry doesn't have access to Cabinet Decisions.

**सूचना अधिकारी**

कविता फुँयाल
उपसचिव
सूचना सञ्चार तथा वैदेशिक समन्वय शाखा
फोन: ९७७-१-४२००२७०
kabita.phuyal@nepal.gov

**प्रवक्ता**

शंकर नेपाल
सहसचिव
प्रशासन महाशाखा
फोन: +९७७-१-४२११०८०
मो.नं. : ९८५१२७०३३०

[Quoted text hidden]

---

**Rukshana Newa** <rukshana.newa@gmail.com> Fri, Sep 25, 2020 at 2:36 PM
To: Kumar Thapa <kmr4481@gmail.com>

https://mail.google.com/mail/u/0?ik=b84aae420f&view=pt&search=all&permthid=thread-a%3Ar9134881689247673032&simpl=msg-a%3Ar524664025 1/2

नेसं ११४१ कछला १


RD771437120NP
Lalitpur DPO (44700)
Letter (RD771437120NP)
From:rukshana kapali
Lalitpur, -
To:pradhanmantri mantri parisad office
Kathmandu, -
Weight: 30.00 Grams Cash: Rs.33.00
Date:10/19/2020 Time: 10:31 AM
OP:nirmalac

श्री सूचना अधिकारीजु,
प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालय,
सिङ्घ दरबार, काठमाडौँ

**विषय: सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भन्ने बारे।**

महोदय,

उपरोक्त सम्बन्धमा निम्न तपसिलमा उल्लिखित विवरण, तथ्याङ्क तथा सूचना मेरो व्यक्तिगत अध्ययन प्रयोजनको लागि आवश्यक परेको जानकारी गराउँदै उक्त सूचना नेपालको संविधानको धारा २७ तथा सूचनाको हक सम्बन्धि ऐन, २०६४ को दफा ३ र ७ अनुसार ती सूचना तथा जानकारीको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन यो निवेदन गर्दछु।

**तपसिल**

१) तत्कालीन संचार मन्त्री श्री राधा कृष्ण मैनालीज्यूले सरकारी संचार माध्यमहरूलाई 'नेवारी भाषा'लाई 'नेपाल भाषा' भनी समाचार प्रकाशित गर्ने सम्बन्धी भएको निर्देशनको प्रमाणित प्रति पाउँ।

उक्त विषय सम्बन्धी गोरखापत्र संस्थानबाट प्रकाशित भएको समाचारको प्रमाणित प्रति पनि यसै पत्र साथ संलग्न छ। उक्त विषयमा सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई सूचना माग गर्दा तहाँबाट यस निर्देशन मन्त्रीपरिषदबाट भएको हुनाले त्यहाँबाटै सूचना माग्नु भनी इमेल मार्फत दिइएको जवाफ पनि यसै पत्र साथ संलग्न छ।

**निवेदक,**

रुक्शना कपाली
rukshana.newa@gmail.com
9808262699
नमुना टेलर्स, पतको, पाटन, ललितपुर महानगर - १६, ललितपुर



नेपाल सरकार

# प्रधानमन्त्री तथा मन्त्रिपरिषद्‌को कार्यालय

सूचना सञ्चार तथा वैदेशिक समन्वय शाखा

सिंहदरबार, काठमाडौं
नेपाल ।



पत्र संख्या ०७७/७८
च.नं. : सु.स.वै./५१२/ १८१२

२०७७/०३/१८

श्री रूक्शना कपाली,
क्वेयर युथ ग्रुप
नमुना टेलर्श, पतको, पाटन, ललितपुर महानगर-१६ ।

विषयः सूचना सम्बन्धमा ।

तपाईले यस कार्यालयका सूचना अधिकारीलाई सम्बोधन गरी तत्कालीन संचार मन्त्री श्री राधाकृष्ण मैनालीज्यूले सरकारी संचार माध्यमहरूलाई 'नेवारी भाषा' लाई 'नेपाल भाषा' भनी समाचार प्रकाशित गर्ने सम्बन्धी भएको निर्देशनको प्रमाणित प्रतिलिपि माग गरी पेश गर्नुभएको निवेदन सञ्चार तथा सूचना प्रविधि मन्त्रालयसँग सम्बन्धित देखिएकोले सोही मन्त्रालयबाट कानून बमोजिम सूचना प्राप्त गर्नुहुन अनुरोध छ ।

बोधार्थः
श्री सञ्चार तथा सूचना प्रविधि मन्त्रालय
सिंहदरबारः उक्त सूचना तहाँसँग सम्बन्धित देखिएकोले निवेदकलाई कानून बमोजिम सूचना उपलब्ध गराइदिने व्यवस्था हुन ।

(कविता फुँयाल)
उपसचिव/सूचना अधिकारी

टेलिफोन : ४२११०६३, ४२११०२१, ४२११०७७, ४२११०६६
फ्याक्स : ४२११०६५, ४२११०८६, ४२११०३८, ४२११०२१, ४२११०४७, पो.ब.नं. : २३३१२, काठमाडौं, नेपाल
ई-मेल : info@opmcm.gov.np
वेब साइट : http://www.opmcm.gov.np



Rukshana Kapali <rukshana.newa@gmail.com>

**सूचना उपलब्ध गराइएको ।**

**nsharma@nepal.gov.np** <nsharma@nepal.gov.np>
To: rukshana newa <rukshana.newa@gmail.com> Wed, Nov 4, 2020 at 12:26 PM

कृपया तपाईले माग गर्नुभएको सूचनासँग सम्बन्धित पत्र संलग्न छ ।

धन्यवाद ।

निराज शर्मा
शाखा अधिकृत
सूचना सञ्चार तथा वैदेशिक समन्वय शाखा
प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय, सिंहदरबार ।



**Image_00001.jpg**
227K



३९ । नेपाल भाषा नामको औपचारिक पुनःस्थापना सम्बन्धी सूचनाको हकद्वारा प्राप्त मन्त्रीपरिषद्को निर्णय : रुक्शना कपाली



RD773258293NP
**Lalitpur DPO (44700)**
**Letter (RD773258293NP)**
**From:**rukshana kapali
Lalitpur, -
**To:**sanchar tatha suchana
Kathmandu, -
**Weight:** 110.00 Grams **Cash:** **Rs.**53.00
**Date:**2/2/2021 Time: 12:51 PM
**OP:**sunubohltp



RD773258231NP
**Lalitpur DPO (44700)**
**Letter (RD773258231NP)**
**From:**rukshana kapali
Lalitpur, -
**To:**pradhanmantri mantri parisad office
Kathmandu, -
**Weight:** 110.00 Grams **Cash:** **Rs.**53.00
**Date:**2/2/2021 Time: 12:51 PM
**OP:**sunubohltp

**नेपाल संवत् ११४१/०४/१६**

श्री कार्यालय प्रमुखज्यू,
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय,
सिंहदरबार, यें (काठमाडौं) ।

श्री कार्यालय प्रमुखज्यू,
प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालय,
सिंहदरबार, यें (काठमाडौं) ।

<u>संयुक्त निवेदन</u>

**विषय : यस कार्यालयहरूमा सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गरेको सन्दर्भमा सत्य तथ्य के हो जानकारी पाउँ ।**

महोदय, उपरोक्त सम्बन्धमा म निवेदकले माथि सम्बोधित यी कार्यालयहरूमा सूचना माग गरि नेपाल संवत् ११४० देखि निवेदनहरू पठाउँदै आएको छु ।

१) नेपाल संवत् ११४० दिल्ला ३ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD765802305NP) सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका सूचना अधिकारीलाई सम्बोधन गरि पत्राचार गरेको थिएँ । उक्त पत्रमा मैले "सामाजिक संजालमा The Rising Nepal पत्रिकामा 14 November 1998 मा यस मन्त्रालयले 'नेवारी भाषा'को सट्टा 'नेपालभाषा' भनी आम सञ्चारलाई निर्देशन दिएको भन्ने बुझिएको हुँदा त्यस्तो कुनै निर्णय भएको छ कि छैन, र छ भने उक्त निर्णयको एक प्रति उपलब्ध गराईदिन हुन अनुरोध गर्दछु ।" भनि उल्लेख गरेको थिएँ । पत्रका साथै The Rising Nepal का ती news clippings हरू समेत समावेश गरेको थिएँ ।

२) हुलाक Domestic Tracking मार्फत् हेर्दा उक्त पत्र मिति 6/28/2020 (मिति २०७७ असार १४) मै सिंहदरबार पुगिसकेको उल्लेख छ । तर त्यसको कुनै जवाफ नआएपछी नेपाल संवत् ११४० यंला २७ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD770810446NP) पुनः सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका सचिवलाई सम्बोधन गरि पत्र पठाएँ । उक्त पत्रमा मैले "मैले मिति नेसं ११४० दिल्ला ३ उल्लेख गरिएको विषय सूचना

तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भनी २०७७ असार १० गते हुलाक कार्यालयबाट निवेदन पठाको र हुलाक कार्यालयको Domestic Tracking Website अनुसार असार १४ गते निवेदन सिङ्घ दरबारमा प्राप्त गरिसकेको देखाइएको तर आज भाद्र २९ (यंला २७) हुँदा सम्म पनि उक्त निवेदनको कुनै जवाफ न-आएकाले मेरो माग बमोजिमको सूचना प्रदान गर्न अनुरोध गर्दै यो निवेदन पेश गर्दछु ।" उल्लेख गरेको थिएँ ।

३) मिति २०७७/०६/०८ उल्लेख भएको चलानी नम्बर प्रेस-२२/९५ रहेको पत्र मार्फत् सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका प्रेस तथा सूचना समन्वय शाखाका शाखा अधिकृतबाट सूचना उपलब्ध गराइएको व्यहोराको पत्र प्राप्त भयो । उक्त पत्रमा गोरखापत्र संस्थानको मिति २०७७/६/६ पत्र संख्या ३८४/०७७/०७८ रहेको पत्र पनि संलग्न थियो । गोरखापत्र संस्थानको उक्त पत्रमा तत्कालीन सञ्चार मन्त्री श्री राधाकृष्ण मैनालीज्यूले सरकारी संचार माध्यमहरूलाई गर्नुभएको निर्देशन सम्बन्धि समाचार The Rising Nepal को 14 Nov, 1998 को वर्ष ३३ अंक ३२५ पृष्ठ १ र ७ मा प्रकाशित समाचारको प्रमाणित प्रलितिपि संलग्न गरिएको उल्लेख छ भने उक्त समाचारको स्रोत राष्ट्रिय समाचार समितिको 13 Nov, 1998 मा प्रकाशित बुलेटिन भएको व्यहोरा समेत जानकारी गराइएको छ ।

४) मैले वास्तवमा उक्त समाचारको प्रमाणित प्रतिलिपि नभई मन्त्रीद्वारा गरिएको उक्त निर्णयको प्रमाणित प्रतिलिपि माग गरेको थिएँ । शायद मेरो कुरा स्पष्ट बुझिएन होला भनि पुनः नेपाल संवत् ११४० अनला ८ मिति उल्लेख गरिएको पत्रबाट सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई ईमेल मार्फत् पत्राचार गरें । मैले उक्त पत्रमा "मैले सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भनी यहाँलाई पठाएको पत्रको आज पसं ०७७/७८, चनं प्रेस-२२/९५ मार्फत मैले सूचना प्राप्त गरें । मैले उक्त सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गर्दा कुन र कहिलेको निर्णय हो भन्ने सन्दर्भ पाइयोस् भनेर The Rising Nepal को समाचारको प्रति टाँस गरेको हुँ । मलाई आवश्यक रहेको सूचना यहाँले पठाए अनुसार सञ्चार मन्त्री श्री राधाकृष्ण मैनालीज्यूले सरकारी संचार माध्यमहरूलाई गर्नुभएको निर्देशन सम्बन्धी समाचारको प्रमाणित प्रतिलिपि होइन कि, उक्त निर्देशनकै प्रमाणित प्रतिलिपि प्राप्त गर्न खोजेको हो । सञ्चार मन्त्री श्री राधाकृष्ण

मैनालीज्यूले सरकारी संचार माध्यमहरूलाई "नेवारी भाषा" नभई "नेपाल भाषा" भनी समाचार प्रकाशित गर्ने सम्बन्धीको निर्देशनको प्रति मेरो व्यक्तिगत अध्ययन प्रयोजनको लागि आवश्यक परेको जानकारी गराउँदै उक्त सूचना नेपालको संविधानको धारा २७ तथा सूचनाको हक सम्बन्धि ऐन, २०६४ को दफा ३ र ७ अनुसार ती सूचना तथा जानकारीको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन यो निवेदन गर्दछु।" उल्लेख गरेको थिएँ।

५) मलाई 25 September 2020 (मिति २०७७ असोज ९) मा ईमेल मार्फत् यो सूचना प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयबाट लिनु भनि जवाफ आयो।

६) मैले नेपाल संवत् ११४१ कछला १ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD771437120NP) प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालयका सूचना अधिकारीलाई सम्बोधन गरि पत्राचार गरेको थिएँ। उक्त पत्रमा मैले "तत्कालीन संचार मन्त्री श्री राधा कृष्ण मैनालीज्यूले सरकारी संचार माध्यमहरूलाई 'नेवारी भाषा'लाई 'नेपाल भाषा' भनी समाचार प्रकाशित गर्ने सम्बन्धी भएको निर्देशनको प्रमाणित प्रति पाउँ" उल्लेख गरेको थिएँ भने गोरखापत्र संस्थानबाट प्रकाशित भएको समाचारको प्रमाणित प्रति उक्त विषयमा सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई सूचना माग गर्दा तहाँबाट यस निर्देशन मन्त्रीपरिषदबाट भएको हुनाले त्यहाँबाटै सूचना माग्नु भनी इमेल मार्फत दिइएको जवाफको प्रति पनि संलग्न गरेको थिएँ।

७) मिति २०७७/०७/१८ उल्लेख भएको चलानी नम्बर सु.स.वै./५१२/१८१२ मार्फत् प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालयका सूचना सञ्चार तथा वैदेशिक समन्वय शाखाका शाखा अधिकृतबाट यो सूचना सञ्चार तथा सूचना प्रविधि मन्त्रालयसँग सम्बन्धित देखिएको सोही कार्यालयबाट लिन आदेशानुसार अनुरोध भनि उल्लेख गरिएको छ।

सूचना माग गरिएको विषयमा सूचना माग गर्नुको आधार गोरखापत्रका प्रकाशित समाचार हो। साल २०५५ कार्तिक २८ गतेमा "'नेपालभाषा' शब्दको प्रयोग गर्न निर्देशन" शीर्षको समाचार प्रकाशन गरिएको छ।

मैले फेरी पनि उपरोक्त सम्बोधित दुबै कार्यालयहरूलाई उक्त समाचारको clipping र गोरखापत्रबाट प्रमाणित समाचारको प्रति यसै पत्र साथ संलग्न गरेको पठाएको छु । यसका साथै माथि यस निवेदनमा बुँदागत उल्लेख गरिएका मैले पठाएका र मैले पाएका सबै निवेदनहरूको फोटोकपि पनि यसै पत्रसाथ संलग्न गर्दछु ।

मलाई उक्त सालमा भएको यस निर्णयको प्रमाणित प्रतिलिप उपलब्ध गरिपाउँ ।

यस कार्यालयहरूमा सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गरेको सन्दर्भमा सत्य तथ्य के हो ? गोरखापत्रमा प्रकाशित समाचारले सञ्चार मन्त्रालयलाई इङ्गित गर्दछ । मन्त्रालयको जवाफमा मन्त्रीपरिषदको कार्यालय इङ्गित गरिएको छ । मन्त्रीपरिषदको कार्यालयको जवाफमा पुनः मन्त्रालय इङ्गित गरिएको छ । यो सूचना वास्तवमा को सँग सम्बन्धित हो ? मैले कुन निकायमा यो सूचना लिनुपर्ने हो ?

निवेदक,

रुक्शना कपाली

पत्राचार गर्ने ठेगाना : नमुना टेलर्स, पतको टोल, ललितपुर महानगर वडा १६, ललितपुर जिल्ला ।

ईमेल ठेगाना : rukshana.newa@gmail.com

सम्पर्क नम्बर : 9808262699



नेपाल सरकार

# प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय

सूचना सञ्चार तथा वैदेशिक समन्वय शाखा

सिंहदरबार, काठमाडौं
नेपाल ।

पत्र संख्या : ०७७/७८
च.नं. : सु.स.वै./५१२/ ३८३८

मिति: २०७७/११/०४

श्री सञ्चार तथा सूचना प्रविधि मन्त्रालय,
सिंहदरबार, काठमाडौं ।

विषयः सूचना सम्बन्धमा ।

प्रस्तुत सन्दर्भमा रूक्साना कपाली, ललितपुर महानगरपालिका-१६, ललितपुरले सूचनाको हकअन्तर्गत नेपाल भाषाको विषयमा भएको मन्त्रिपरिषद् बैठकको निर्णयसम्बन्धी सूचना माग गर्दै मिति २०७७/१०/२८ गते यस कार्यालयमा निवेदन दर्ता गर्नु भएकोमा (तहाँ मन्त्रालयमा समेत दर्ता भएको संयुक्त निवेदन) तत्कालीन सूचना तथा सञ्चार मन्त्रालयको प्रस्तावमा मिति २०५२/०५/२२ गतेको मन्त्रिपरिषद् बैठकले "सञ्चार माध्यमबाट विभिन्न भाषामा कार्यक्रम सञ्चालन गर्ने क्रममा "नेवार भाषा" भन्ने शब्दको सट्टा "नेपालभाषा" भन्ने गर्ने निर्णय भएको देखिएकोले निवेदकलाई नियमानुसार सोही मन्त्रालयबाट सूचना उपलब्ध गराउने प्रयोजनार्थ पठाइएको व्यहोरा आदेशानुसार अनुरोध छ ।

.............................
सूचना अधिकारी
कविता फुयाँल

बोधार्थः
श्री रूक्साना कपाली,
ललितपुर महानगरपालिका १६, ललितपुर । (९८०८२६२६९९)

टेलिफोन : ४२११०६३, ४२११०२१, ४२११०७७, ४२११०६६
फ्याक्स : ४२११०६५, ४२११०८६, ४२११०३८, ४२११०२१, ४२११०४७, पो.ब.नं. : २३३१२, काठमाडौं, नेपाल
ई-मेल : info@opmcm.gov.np
वेब साइट : http://www.opmcm.gov.np



Rukshana Kapali <rukshana.newa@gmail.com>

**Letter From PM Office**

**Bhojendra Basnet** <basnet.bhojendra@gmail.com>
To: rukshana.newa@gmail.com

Tue, Feb 16, 2021 at 4:13 PM

Please download...



**Image_00001.jpg**
236K



४५ | नेपाल भाषा नामको औपचारिक पुनःस्थापना सम्बन्धी सूचनाको हकद्वारा प्राप्त मन्त्रीपरिषद्को निर्णय: रुक्शना कपाली



नेपाल सरकार

# सञ्चार तथा सूचना प्रविधि मन्त्रालय

(प्रेस तथा सूचना समन्वय शाखा)

सिंहदरवार, काठमाण्डौ

प.सं. ०७७/७८

च.नं.प्रेस-२२/ ३९९

मिति:-२०७७।११।०७

बिषय:- सूचना सम्बन्धमा।

श्री रुक्शना कपाली,

ललितपुर महानगरपालिका १६, ललितपुर।

प्रस्तुत बिषयमा प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय प.सं. ०७७/७८ च.नं. सु.स.बै./५१२/३७३८ को पत्र प्राप्त भई व्यहोरा अवगत भयो। तपाई श्री रुक्शना कपालीले सूचनाको हक अन्तर्गत नेपाल भाषाको विषयमा भएको मन्त्रिपरिषद् बैठकको निर्णय सम्बन्धी सूचना माग गर्दै मिति २०७७/१०/२८ गते त्यस कार्यालयमा निवेदन दर्ता गर्नु भएकोमा (यस मन्त्रालयमा समेत दर्ता भएको संयुक्त निवेदन) तत्कालीन सूचना तथा सञ्चार मन्त्रालयको प्रस्तावमा मिति २०५२/०५/२२ गतेको मन्त्रिपरिषद् बैठकले "सञ्चार माध्यमबाट विभिन्न भाषामा कार्यक्रम सञ्चालन गर्ने क्रममा 'नेवार भाषा' भन्ने शब्दको सट्टा 'नेपाल भाषा' भन्ने गर्ने" निर्णय भएको देखिएकोले निवेदकलाई नियमानुसार यस मन्त्रालयबाट सूचना उपलब्ध गराउने प्रयोजनार्थ भन्ने ब्यहोरा सहितको पत्र पठाइएको तर यस मन्त्रायलको अभिलेखमा सो विषयसँग सम्बद्ध निर्णय भएको नदेखिएको एवं नेपाल सरकार (कार्य सम्पादन) नियमावली, २०६४ को नियम २९,३२,३३ र ४० मा भएको व्यवस्थाहरु अभिलेख व्यवस्थापन सँग आकर्षित हुने देखिएकाले जानकारीका लागि त्यसको छाँयाप्रति यसैसाथ सँलग्न गरी तहाँ पठाइएको व्यहोरा आदेशानुसार अनुरोध छ।

२०७७/११/०७

(कुमार थापा)

शाखा अधिकृत

बोधार्थः–

श्री प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय, सिंहदरबार, काठमाडौं।

श्री राष्ट्रिय सूचना आयोग, देवीनगर, बानेश्वर।

फोन: ०१-४२११८२३,०१-४२००४४२,०१-४२००२४७,फ्याक्स नं: ०१-४२११७२९,०१-४२११६१०

Website: www.mocit.gov.np, Email:info@mocit.gov.np

# नेपाल सरकार (कार्य सम्पादन) नियमावली, २०६४

नेपाल राजपत्रमा प्रकाशित मिति
२०७१।९।२९

संशोधन
नेपाल सरकार (कार्य सम्पादन) (चौथो संशोधन) नियमावली, २०७३ २०७३।९।११

[∂]नेपाल सरकारबाट सम्पादन गरिने कार्यलाई व्यवस्थित गर्न नेपालको संविधानको धारा ८२ को उपधारा (१) ले दिएको अधिकार प्रयोग गरी नेपाल सरकारले देहायका नियमहरु बनाएको छ।

## परिच्छेद १
## प्रारम्भिक

१. **संक्षिप्त नाम र प्रारम्भः** (१) यस नियमावलीको नाम "नेपाल सरकार (कार्यसम्पादन) नियमावली, २०६४" रहेको छ।

(२) यो नियमावली तुरुन्त प्रारम्भ हुनेछ।

२. **परिभाषाः** (१) विषय वा प्रसंङ्गले अर्को अर्थ नलागेमा यस नियमावलीमा –

(क) "मन्त्री" भन्नाले प्रधानमन्त्री, उपप्रधानमन्त्री वा मन्त्री सम्झनु पर्छ र सो शब्दले स्वतन्त्र रुपमा मन्त्रालयको कार्यभार सम्हाल्ने राज्यमन्त्रीलाई समेत जनाउँछ।

(ख) "मन्त्रालय" भन्नाले कार्यविभाजन नियमावली बमोजिम तोकिएको मन्त्रालय सम्झनु पर्छ।

(ग) "मन्त्रिपरिषद्को सचिव" भन्नाले नेपाल सरकारको मुख्यसचिव सम्झनु पर्छ।

(घ) "सचिव" भन्नाले मन्त्रालयको विशिष्ट श्रेणीको अधिकृत सम्झनु पर्छ र सो शब्दले नेपाल सरकारको मुख्यसचिव समेतलाई जनाउँछ।

[∂](ङ) "कार्यविभाजन नियमावली" भन्नाले संविधानको धारा ८२ को उपधारा (१) ले दिएको अधिकार प्रयोग गरी नेपाल सरकारले बनाएको नेपाल सरकार (कार्यविभाजन) नियमावली, २०७२ सम्झनु पर्छ।

[∂](च) "संविधान" भन्नाले नेपालको संविधान सम्झनु पर्छ।

(२) विषय वा प्रसँगले अर्को अर्थ नलागेमा यस नियमावलीमा व्यक्त भएका कुराहरुको अधिनमा रही कानून व्याख्यासम्बन्धी प्रचलित कानूनी व्यवस्था नेपाल कानूनको व्याख्यामा लागू भए सरह यो नियमावलीको व्याख्यामा पनि लागू हुनेछ।

३. **कामको फछ्र्यौटः** यस नियमावलीमा भएका व्यवस्थाको प्रतिकूल नहुने गरी नेपाल सरकारको कामको फछ्र्यौट देहाय बमोजिम हुनेछ :–

(क) परिच्छेद – २ को व्यवस्था अनुसार मन्त्रालयबाट,

(ख) परिच्छेद – ३ को व्यवस्था अनुसार प्रधानमन्त्रीबाट,

(ग) परिच्छेद – ४ को व्यवस्था अनुसार मन्त्रिपरिषद्बाट,

## परिच्छेद – २
## मन्त्रालयबाट कामको फछ्र्यौट

४. **मन्त्रीबाट कामको फछ्र्यौटः** कार्यविभाजन नियमावली अनुसार सम्बन्धित मन्त्रालयको लागि तोकिएको कामको फछ्र्यौट गर्दा अरु मन्त्रालयसँग परामर्श गर्ने र मन्त्रिपरिषद्मा पेश गर्ने विषयका हकमा यस नियमावलीमा व्यवस्था भए बमोजिम गर्नु पर्नेछ। सो बाहेकका अन्य कुराका हकमा यस नियमावली बमोजिम मन्त्री वा निजको निर्देशन तथा सामान्य नियन्त्रणमा नियम ५ बमोजिम फछ्र्यौट गरिनेछ।

तर,

(क) आफ्नो मन्त्रालयसँग सम्बन्धित महत्वपूर्ण सम्झिएका विषयमा निर्णय गर्नु वा आदेश दिनु अगावै प्रधानमन्त्रीसँग परामर्श गर्नु प्रत्येक मन्त्रीको कर्तव्य हुनेछ।

(ख) प्रचलित कानूनमा कुनै काम खास अधिकारीले फछ्र्यौट गर्ने भनी किटिएको रहेछ भने सो बमोजिम गर्न यस उपनियमको कुनै कुराले बाधा पुऱ्याउने छैन।

[∂] चौथो संशोधनद्वारा संशोधित।

(३) उपनियम (१) बमोजिम मन्त्रिपरिषद्को सचिवकहाँ प्राप्त हुन आएको प्रस्ताव प्रधानमन्त्रीको निर्देशनको अधीनमा रही प्राथमिकताक्रम निर्धारण गरी निर्णयको लागि मन्त्रिपरिषद्मा पेश गर्नुपर्नेछ।

२३. **कार्यसूचीको वितरण:** (१) नियम २१ वा नियम २२ बमोजिम प्राप्त प्रस्तावहरुको आधारमा मन्त्रिपरिषद्को सचिवले मन्त्रिपरिषद्मा छलफल हुने विषयको कार्यसूची प्रधानमन्त्रीद्वारा निर्धारित तरिका अनुसार तयार गर्नेछ।

तर, प्रधानमन्त्रीले अन्यथा आदेश दिएकोमा प्रस्तावको रुपमा पेश नगरिएको विषयलाई पनि कार्यसूचीमा समावेश गर्न सकिनेछ।

(२) सामान्यतः मन्त्रिपरिषद्को बैठक बस्नु भन्दा चौबीस घण्टा अगावै बैठकको कार्यसूची तथा तत्सम्बन्धी कागजातहरु मन्त्रिपरिषद्को सचिवले प्रत्येक मन्त्रीलाई वितरण गरी सक्नु पर्नेछ।

(३) प्रधानमन्त्रीले अनुमति दिएकोमा बाहेक कार्यसूचीमा नपरेको विषय मन्त्रिपरिषद्को बैठकमा पेश हुने छैन।

(४) कुनै अवस्थामा कुनै विषयको महत्व संवेदनशीलता वा गाम्भीर्य हेरी मन्त्रिपरिषद्को बैठकमा छलफल हुने प्रस्ताव वितरण नगर्न पनि सकिनेछ। यस्तो अवस्थामा सम्बन्धित विषयको सूचना लिखित वा मौखिक रुपमा दिन सकिनेछ।

२४. **मन्त्रिपरिषद्को बैठक:** (१) प्रधानमन्त्रीको निर्देशनबमोजिम मन्त्रिपरिषद्को सचिवले मन्त्रिपरिषद्को बैठक बोलाउनेछ।

(२) प्रधानमन्त्रीले मन्त्रिपरिषद्को बैठकको अध्यक्षता गर्नेछ।

(३) प्रधानमन्त्रीले अनुमति दिएको अवस्थामा राज्यमन्त्री र सहायक मन्त्री समेत मन्त्रिपरिषद्को बैठकमा उपस्थित हुन सक्नेछन्।

२५. **छलफल र निर्णयको अभिलेख:** मन्त्रिपरिषद्को सचिव मन्त्रिपरिषद्को बैठकमा उपस्थित हुनेछ र मन्त्रिपरिषद्बाट भएका निर्णयको अभिलेख तयार गर्नेछ।

∝.......

२६. **निर्णयको अभिलेख वितरण:** (१) मन्त्रिपरिषद्को सचिवले मन्त्रिपरिषद्को बैठक भएको सामान्यतः चौबीस घण्टाभित्र निर्णयको अभिलेखको एक प्रति प्रत्येक मन्त्रीलाई पठाउनु पर्नेछ र कुनै मन्त्रीको विचारमा त्यसमा संशोधन हुनुपर्छ भन्ने लागेमा अभिलेख प्राप्त भएको चौबीस घण्टाभित्र आफ्नो सुझाव मन्त्रिपरिषद्को सचिव कहाँ पठाउनु पर्नेछ।

(२) मन्त्रिपरिषद्को निर्णयको एक प्रति राज्यमन्त्री तथा सहायकमन्त्रीहरुलाई पनि पठाइनेछ।

(३) उपनियम (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि प्रधानमन्त्रीको निर्देशनमा मन्त्रिपरिषद्को कुनै बैठकको केही वा सम्पूर्ण निर्णय वितरण नगर्न पनि सकिनेछ।

२७. **निर्णयको अभिलेख संशोधन:** नियम २६ को उपनियम (१) बमोजिम कुनै मन्त्रीबाट मन्त्रिपरिषद्को निर्णयका सम्बन्धमा कुनै संशोधनसम्बन्धी सुझाव प्राप्त भएमा प्रधानमन्त्रीबाट भएको निर्देशन बमोजिम मन्त्रिपरिषद्को सचिवले अभिलेख सच्याई त्यस्तो संशोधनको व्यहोरा सबै मन्त्रीहरुलाई पठाउनु पर्नेछ।

२८. **मन्त्रिपरिषद्को निर्णयको कार्यान्वयन:** (१) अनुसूची– १ मा लेखिएका विषयहरुमा मन्त्रिपरिषद्को निर्णय भएपछि कार्यान्वयन हुनेछ।

∂(२) मन्त्रिपरिषद्को निर्णय कार्यान्वयन भए वा नभएको सम्बन्धमा मन्त्रिपरिषद्को सचिवले अनुगमन गर्न वा गराउन सक्नेछ र त्यसरी अनुगमन गर्दा वा गराउँदा निर्णय कार्यान्वयन भएको नदेखिएमा सो कार्यान्वयन गर्न सम्बन्धित मन्त्रालय वा निकायको सचिवलाई निर्देशन दिई त्यसको जानकारी प्रधानमन्त्रीलाई गराउनु पर्नेछ।

२९. **निर्णयको अभिलेख पठाउने:** मन्त्रिपरिषद्को निर्णयको अभिलेख तयार भएपछि मन्त्रिपरिषद्का सचिवले निर्णयको एक प्रति कार्यान्वयनका लागि सम्बन्धित सचिव कहाँ पठाउनु पर्नेछ।

३०. **मन्त्रिपरिषद्को सचिवले अभिलेख राख्ने:** मन्त्रिपरिषद्को सचिवले देहायका कागजपत्रहरुको अभिलेख राख्नु पर्नेछ :–

(क) नियम २१ मा उल्लिखित सबै कागजपत्रहरुको एक एक प्रति,

(ख) नियम २३,२४,२५,२६ र २७ अन्तर्गत तयार गरिएका अभिलेखहरु।

---

∝ चौथो संशोधनद्वारा झिकिएको।

∂ चौथो संशोधनद्वारा संशोधित।

कार्यसम्पादन गर्न जिम्मेवारी सुम्पन सक्नेछ र त्यस्तो समितिले सम्पादन गरेको कार्य मन्त्रिपरिषद्ले गरेकोसरह हुनेछ।

(२) उपनियम (१) बमोजिमको समितिको निर्णय नियम ३१. को उपनियम (७) बमोजिम प्रमाणित गर्नुपर्ने छ।

३९. **मन्त्रिपरिषद्को सचिवः** (१) नेपाल सरकारको मुख्यसचिव मन्त्रिपरिषद्को सचिव हुनेछ।

(२) यस नियमावलीको अधीनमा रही मन्त्रिपरिषद्को सचिवको प्रमुख काम र कर्तव्य देहाय बमोजिम हुनेछ :

(क) नेपाल सरकार, मन्त्रिपरिषद्बाट भएका निर्णयहरु तथा प्रधानमन्त्रीबाट भएका निर्देशनहरु कार्यान्वयन गर्ने, गराउने र सोको अनुगमन गर्ने।

(ख) प्रधानमन्त्रीलाई मुलुकको प्रशासनिक, शान्तिसुरक्षा, आर्थिक विकास तथा वैदेशिक सम्बन्धसम्बन्धी महत्वपूर्ण विषयमा अवगत गराउने।

(ग) नेपाल सरकारका विभिन्न मन्त्रालय, कार्यालयबीच समन्वय सुदृढ गर्ने, सरकारी कामकारवाहीलाई चुस्त र प्रभावकारी बनाउन आवश्यक निर्देशन दिने, सुपरिवेक्षण गर्ने र अनुगमन गर्ने।

(घ) राष्ट्रियस्तरका विकास आयोजनाहरु र सार्वजनिक सरोकारका विषयमा उत्पन्न विवाद सुल्झाउन सम्बन्धित सबै पक्षसँग वार्ता तथा समन्वय गरी उपयुक्त निकास पत्ता लगाउने।

(ङ) राजपत्राङ्कित विशिष्ट श्रेणीका सचिवहरुको विदा, काज स्वीकृत गर्ने।

(च) यस नियमावलीबमोजिम गर्नुपर्ने अन्य कार्य गर्ने गराउने।

(छ) मन्त्रिपरिषद्बाट तोकिएका अन्य कार्यहरु गर्ने।

*(३) मन्त्रिपरिषद्को सचिव अनुपस्थित रहेको अवस्थामा यस नियमावली बमोजिम मन्त्रिपरिषद्को सचिवले गर्ने कार्य प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयको सचिवहरूमध्ये उपस्थित वरिष्ठ सचिवले गर्नेछ।

४० **निर्णयको अभिलेख धुल्याउनेः** नियम ३३ बमोजिम प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयमा फिर्ता हुन आएका कागजपत्रहरु प्रधानमन्त्री तथा मन्त्रिपरिषद् कार्यालयको सचिवले वा अधिकृत कर्मचारीले धुल्याउन सक्नेछ।

४१. **सहयोग र समन्वयः** मन्त्रिपरिषद्का सदस्यहरु र मन्त्रालयका सचिवहरुले आ–आफ्नो कार्यक्षेत्र भित्र रही आपसमा वा अन्य पदाधिकारीहरुसँग सहयोग र समन्वयको भावनाले काम गर्नु पर्नेछ र आ–आफ्नो मातहतका कार्यालय वा अधिकारीहरुको कार्यक्षेत्रमा अनावश्यक हस्तक्षेप गर्न वा काममा वाधा पार्न हुँदैन।

४२. **पक्षपात वा मरमोलाहिजा गर्न नहुनेः** मन्त्रिपरिषद्का सदस्यहरु र मन्त्रालयका सचिवहरुले आ-आफ्नो कर्तव्य पालना गर्दा आ–आफ्नो मन्त्रालय र मातहतका कार्यालयहरुमा अनुचित प्रभाव पारी आ–आफ्नो नातेदार नियुक्त गर्ने, काजमा ल्याउने वा सरुवा गर्नेजस्ता पक्षपातपूर्ण वा मरमोलाहिजायुक्त कुनै कार्य गर्नु हुँदैन।

४३. **बैठकमा भाग लिन नहुनेः** मन्त्रिपरिषद्को कुनै बैठकमा छलफल हुने कुनै विषयमा कुनै मन्त्रीको निजी स्वार्थ निहित भएको अवस्थामा त्यस्तो विषय उपर छलफल हुँदा त्यस्तो मन्त्रीले भाग लिन हुँदैन। *त्यस्तो अवस्था परी बैठकमा भाग लिन नमिल्ने भएमा सम्बन्धित मन्त्रीले सो को जानकारी प्रधानमन्त्रीलाई गराउनु पर्नेछ।

४४. **मन्त्रिपरिषद्बाट प्रतिपादित नीति निर्देशन लागू गर्नेः** मन्त्रिपरिषद्का सदस्य र मन्त्रालयका सचिवहरुले मन्त्रिपरिषद्बाट प्रतिपादित नीति निर्देशन र सो अनुरुपको कार्यक्रम कार्यान्वयन गर्नु, गराउनु पर्नेछ।

४५. **अन्य कुराको निर्णयः** यस नियमावलीमा लेखिएदेखि बाहेक मुलुकको शासन संचालनसम्बन्धी अन्य विषयमा मन्त्रिपरिषद्को निर्णयबमोजिम हुनेछ।

तर प्रचलित कानून बमोजिम हुने विषयमा सोही बमोजिम हुनेछ।

४६. **खारेजीः** नेपाल सरकार (कार्यसम्पादन) नियमावली, २०६३ खारेज गरिएको छ।

* चौथो संशोधनद्वारा थप।

रुपान्तरः (१) "नेपालको अन्तरिम संविधान, २०६३" भन्ने शब्दहरुको सट्टा "संविधान"।

(२) "कानून, न्याय, संविधानसभा तथा संसदीय मामिला मन्त्रालय" भन्ने शब्दहरुको सट्टा "कानून, न्याय तथा संसदीय मामिला मन्त्रालय"।




**५०।** नेपाल भाषा नामको औपचारिक पुनःस्थापना सम्बन्धी सूचनाको हकद्वारा प्राप्त मन्त्रीपरिषद्को निर्णय: रुक्शना कपाली

श्री राष्ट्रिय सूचना आयोगमा पेश गरेको

**पुनरावेदन पत्र**

ललितपुर जिल्ला ललितपुर महानगरपालिका वडा नं १६ बस्ने वर्ष २१ को रुक्शना कपाली ................... १ पुनरावेदक

विरुद्ध

प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयका कार्यालय प्रमुख ................................................ १
प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयका सूचना अधिकारी ................................................ १
संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका कार्यालय प्रमुख ........................................ १ विपक्षी
संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका सूचना अधिकारी ........................................ १
सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका कार्यालय प्रमुख ................................................ १
सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका सूचना अधिकारी ................................................ १

विषय : सूचना उपलब्ध गराउने आदेश गरि पाउँ ।

म निवेदक रुक्शना कपालीले विपक्षी प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालय, सञ्चार तथा सूचना प्रविधि मन्त्रालय र संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयमा सूचना माग गरि उक्त कार्यालयहरूका कार्यालय प्रमुखलाई नेपाल संवत् ११४१/०४/१६ मिति २०७७ माघ २० गते पत्राचार गरि माग गरेको नेपालभाषा सम्बन्धी मन्त्रीपरिषदको निर्णय विषयको सूचना उपलब्ध नगराएको र कुनै जवाफ समेत नदिएको कानुन विपरित रहेको हुँदा ऐनको म्याद पैतीस दिनभित्र यो पुनरावेदन गर्दछु ।

**१. देहाय बमोजिमको सूचना उपलब्ध गरिदिनुहुन आदेश गरी पाउने व्यहोरा उल्लेख गर्ने ।**

**क)** २०५२ सालमा 'नेवारी भाषा' भन्ने शब्दको सट्टा 'नेपालभाषा' भनि सम्बोधन गर्नुपर्ने भनि गरेको मन्त्रीपरिषदको निर्णयको प्रमाणित प्रति

**ख)** २०५५ सालमा तत्कालीन सूचना तथा सञ्चार मन्त्री राधाकृष्ण मैनालीले 'नेपालभाषा' शब्दको प्रयोग गर्न दिएको निर्देशनको प्रमाणित प्रति

रुक्शना

रुक्शना

२. संलग्न कागजात

**२.१ उपरोक्त १(क) मा माग गरिएको सूचना सँग सम्बन्धित**

क) नेपाल संवत् ११४० दिल्ला ३ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD765802314NP) प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालयका सूचना अधिकारीलाई सूचना माग गरि पठाइएको पत्र।

ख) विपक्षी प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालयका सूचना तथा वैदेशिक समन्वय शाखाका शाखा अधिकृतबाट मिति २०७७/०३/१७ उल्लेख भएको चलानी नम्बर सू.स.वै./५१२/६३६३ को पत्र ।

ग) नेपाल संवत् ११४० दिल्ला १४ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट न RD765950525NP) संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका सूचना अधिकारीलाई सूचना माग गरि पठाइएको पत्र ।

घ) नेपाल संवत् ११४० यंला २७ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD770810446NP) संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका सचिवलाई माग गरिएको सूचना सम्बन्धि जवाफ नआएको भनि पुनः सूचना माग गरिएको पत्र ।

ङ) विपक्षी संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका प्रशासन शाखाका शाखा अधिकृतबाट मिति २०७७/०६/२० उल्लेख भएको चलानी नम्बर २८९ को पत्र ।

च) पुनः नेपाल संवत् ११४१ कछला १ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD771437080NP) संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका कार्यालय प्रमुखलाई सूचना माग गरि पठाइएको पत्र ।

छ) नेपाल संवत् ११४१/०४/१६ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय (हुलाक टिकट नं RD773258355NP) एवं प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालय (हुलाक टिकट नं RD७७३२५८३२०NP) विपक्षी दुबै कार्यालयका प्रमुखलाई सूचना माग गरि पठाइएको पत्र ।

*[हुलाक Domestic Tracking का अनुसार यी निवेदनहरू मिति २०७७ माघ २३ गते सम्बन्धित कार्यालय पुगिसकेको तर निवेदन उपर कुनै जवाफ न आएको ]*

**२.२ उपरोक्त १(ख) मा माग गरिएको सूचना सँग सम्बन्धित**

क) नेपाल संवत् ११४० दिल्ला ३ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD765802305NP) सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका सूचना अधिकारीलाई सूचना माग गरि पठाइएको पत्र ।

ख) नेपाल संवत् ११४० यंला २७ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD770810446NP) सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका सचिवलाई माग गरिएको सूचना सम्बन्धि जवाफ नआएको भनि पुनः सूचना माग गरिएको पत्र ।

रुक्शना

ग) मिति २०७७/०६/०८ उल्लेख भएको चलानी नम्बर प्रेस-२२/९५ रहेको पत्र मार्फत् सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका प्रेस तथा सूचना समन्वय शाखाका शाखा अधिकृतबाट सूचना उपलब्ध गराइएको व्यहोराको पत्र ।

घ) नेपाल संवत् ११४० अनला ८ मिति उल्लेख गरिएको पत्रबाट सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई माग गरिएको सूचना बमोजिम प्राप्त नभएको र मैले माग गरेको सूचना के को भनि उल्लेख गरि पठाएको पत्र ।

ङ) विपक्षी सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका सूचना अधिकारीद्वारा यो सूचना प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयबाट लिनु भनि 25 September 2020 (मिति २०७७ असोज ९) मा पाएको ईमेल ।

च) नेपाल संवत् ११४१ कछला १ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् (हुलाक टिकट नं RD771437120NP) प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालयका सूचना अधिकारीलाई सूचना माग गरि पठाइएको पत्र ।

छ) विपक्षी प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालयका सूचना सञ्चार तथा वैदेशिक समन्वय शाखाका शाखा अधिकृतबाट मिति २०७७/०७/१८ उल्लेख भएको चलानी नम्बर सु.स.वै./५१२/१८१२ को पत्र ।

ज) नेपाल संवत् ११४१/०४/१६ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् सञ्चार तथा सूचना प्रविधि मन्त्रालय (हुलाक टिकट नं RD773258293NP) एवं प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालय (हुलाक टिकट नं RD773258231NP) विपक्षी दुवै कार्यालयका प्रमुखलाई सूचना माग गरि पठाइएको पत्र ।

झ) विपक्षी प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालयका सूचना सञ्चार तथा वैदेशिक समन्वय शाखाका सूचना अधिकारीबाट मिति २०७७/११/०४ मा मलाई बोधार्थ गरिएको पत्र ।

**२.३ विविध**

क) माग गरिएको सूचना सम्बन्धी गोरखापत्रका प्रकाशन भएका समाचारहरूको खिचिएको प्रति तथा प्रमाणित प्रति ।

ख) नेपाली नागरिकताको प्रमाणित प्रतिलिपि ।

माथि लेखिएको व्यहोरा ठिक साँचो हो, झुट्टा ठहरे कानुन बमोजिम सहुँला बुझाउँला ।



<u>पुनरावेदक</u>

नाम :- रुक्शना कपाली
ठेगाना : - पतको टोल, ललितपुर महानगरपालिका वडा नं १६, ललितपुर
फोन :- 9808262699
इमेल :- rukshana.newa@gmail.com

नेपाल संवत् ११४१/०५/१५ इति सम्वत् २०७७ साल फागुन महिना १९ गते रोज ४ शुभम् ................

पठाउने,
रुक्शना कपाली
पतको
ल.पु.म.न.पा. -१६,
ललितपुर
९८०८२६२६९९

पाउने,
श्री सूचना आयुक्तज्यू,
राष्ट्रिय सूचना आयोग,
काठमाडौं,
देवीनगर, बानेश्वर -१०
+977-1-4496545
4464412
4496545

"माग गरेको सूचना नदिएको, कुनै जवाफ समेत नपाएकोले पुनरावेदन निवेदन।"





# राष्ट्रिय सूचना आयोग

का. म. न. पा.-१०, बानेश्वर, देवीनगर






प. सं. ०७७/७८

पु. च. नं. 686

च. नं. ............

मिति २०७७।१२।१०

श्री कार्यालय प्रमुखज्यू,
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय, सिंहदरबार ।
श्री सूचना अधिकारीज्यू,
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय, सिंहदरबार ।

**विषय :- आदेश कार्यान्वयन सम्बन्धमा ।**

उपरोक्त विषयमा ललितपुर जिल्ला, ल. म. पा.-१६ निवासी रुक्शना कपालीको पुनरावेदनको सम्बन्धमा यस आयोगबाट मिति २०७७।१२।०८ मा जारी भएको आदेश कार्यान्वयन गर्नुहुन आदेशानुसार अनुरोध गर्दछु । यस आयोगबाट भएको आदेश र पुनरावेदकको पुनरावेदनको छाँयाप्रति यसै पत्रसाथ संलग्न छ ।

(मन्दिरा महर्जन
शाखा अधिकृत

**वोधार्थ** :-
श्री रुक्शना कपाली
ल. म. पा.-१६, ललितपुर
मो. नं. ९८०८२६२६९९

सूचना लिने दिने संस्कृतिको बिकास गरौं
सूचना नपाए उजुरी गरौं, पाए जानकारी गराऔं ।
फोन नं: ०१४४६४४१२, ०१४४९६५४४ फ्याक्स: ०१४४९६५४५, ईमेल: info@nic.gov.np वेबसाईट: www.nic.gov.np




# राष्ट्रिय सूचना आयोग

प्रमुख सूचना आयुक्त श्री महेन्द्र मान गुरूङ्ग
सूचना आयुक्त श्री कमला ओली थापा
सूचना आयुक्त श्री रत्नप्रसाद मैनाली

बाट जारी भएको

आदेश

२०७७/७८ सालको मुद्दा नं. ४२२

निर्णय नं. ५५६

ललितपुर जिल्ला, ल. म. पा.-१६ निवासी रुक्शना कपाली ______ १ } पुनरावेदक पक्ष

विरूद्ध

सञ्चार तथा सूचना प्रविधि मन्त्रालय, सिंहदरबारका कार्यालय प्रमुख ______ १ } प्रत्यार्थी
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय, सिंहदरबारका सूचना अधिकारी ______ १ } विपक्षी

विषय :- लिखित जवाफ पेश गर्नू ।

यसमा पुनरावेदक ललितपुर जिल्ला, ल. म. पा.-१६ निवासी रुक्शना कपालीको मिति २०७७।११।२५ मा आयोगमा दर्ता गरेको पुनरावेदनमा उल्लेख भए बमोजिम पक्षलाई सूचना उपलब्ध गराउनू भन्ने आदेश दिन नपर्नाको कुनै कारण भए सोको आधार र प्रमाण सहित बाटोको म्याद बाहेक ७ (सात) दिनभित्र आयोग समक्ष लिखित व्यहोरा पठाउनू भनी विपक्षीका नाममा यो आदेश जारी गरिएको छ । पुनरावेदन पत्रको प्रतिलिपि साथै राखी विपक्षीलाई प्रस्तुत आदेशमा तोकिएको म्यादभित्र लिखित जवाफ पठाउन आदेश सहित लेखी पठाउनू । यस आदेशमा तोकिएको अवधिभित्र लिखित जवाफ पेश नभए नियमानुसार गरी पेश गर्नू ।

| | | |
|---|---|---|
| (रत्नप्रसाद मैनाली) | (कमला ओली थापा) | (महेन्द्र मान गुरूङ्ग) |
| सूचना आयुक्त | सूचना आयुक्त | प्रमुख सूचना आयुक्त |

ईति सम्वत् २०७७ साल चैत महिना ०८ गते रोज १ शुभम् ।




५७ । नेपाल भाषा नामको औपचारिक पुनःस्थापना सम्बन्धी सूचनाको हकद्वारा प्राप्त मन्त्रीपरिषद्को निर्णय: रुक्शना कपाली




**नेपाल संवत् ११४१ दिल्ला १३**

श्री सूचना अधिकारीज्यू,
सूचना आयोग,
काठमाडौं ।

**विषय : जानकारी पाउँ भनि ।**

महोदय,

उपरोक्त सम्बन्धमा मैले यस् आयोगमा दर्ता गरेको पुनरावेदन निवेदन सम्बन्धी २०७७/७८ सालको मुद्दा नं ४२२ को निर्णय नं ५५६ मिति २०७७ चैत ०८ गतेको आदेश र मिति २०७७/१२/१० पुचनं ७६७ को पत्र मैले प्राप्त गरेको छु । उक्त मुद्दाको कारवाही कता पुगेको छ र त्यसको अहिले स्थिति के छ भन्ने बारे जानकारी पाउँ ।

**भवदीय,**

रुक्शना कपाली रुक्शना
लपुमनपा-१६, ललितपुर
९८०८२६२६९९



# राष्ट्रिय सूचना आयोग

का. म. न. पा.-१०, बानेश्वर, देवीनगर





प. सं. ०७७/७८

पु. च. नं. ११०३

च. नं. ............

मिति २०७८।०३।१८

विषय : जानकारी सम्बन्धमा ।

श्री रुक्शना कपाली
ल. म. पा.-१६, ललितपुर
मो. नं. ९८०८२६२६९९

उपर्युक्त विषयमा तपाईले सूचना उपलब्ध नगराएको भनी सन्चार तथा सूचना प्रविधि मन्त्रालय सिंहदरवार काठमाण्डौलाई विपक्षी बनाई यस आयोगमा दिएको पुनरावेदनको सम्बन्धमा उक्त मन्त्रालयको च.नं. ऐन - ४/८५ मिति २०७७।१२।३१ को पत्रसाथ प्राप्त भएको लिखित जवाफको प्रतिलिपि पाना ५ (पाँच) तपाईको जानकारीको लागि पठाईएको व्यहोरा आदेशानुसार अनुरोध गर्दछु । साथै, प्राप्त भएको सूचना माग अनुसारको भए आयोगलाई जानकारी गराउनु हुन र माग गरेको सूचना प्राप्त नभएको भए माग गरेको सूचना ,प्राप्त भएको सूचना र प्राप्त हुन बाँकी भएको सूचना स्पष्ट रुपमा खुलाई तीन महले विवरण सहित आयोगमा निवेदन गर्नु हुन अनुरोध गरिन्छ ।

०७८।३।१९
(शान्ति बाग्ले)
कानुन अधिकृत



५९ । नेपाल भाषा नामको औपचारिक पुनःस्थापना सम्बन्धी सूचनाको हकद्वारा प्राप्त मन्त्रीपरिषद्को निर्णय: रुक्शना कपाली



नेपाल सरकार

# सञ्चार तथा सूचना प्रविधि मन्त्रालय

सिंहदरवार, काठमाण्डौ

राष्ट्रिय सूचना आयोग
दर्ता नं.:- ३२०२
मिति :- २०७८/०१/०२

प.सं. :-०७७।७८
च.नं. ऐन-४/८५

मिति:२०७७।१२।३१

बिषय:-लिखित जवाफ पठाइएको सम्वन्धमा ।

श्री राष्ट्रिय सूचना आयोग,
देविनगर, काठमाडौ ।

प्रस्तुत विषयमा रुक्शना कपालीले यस मन्त्रालय समेतलाई विपक्षी बनाई राष्ट्रिय सूचना आयोग समक्ष दिनु भएको सम्बत् २०७७ सालको मुद्दा नं. ४२२ को पुनरावेदनको सम्बन्धमा यस मन्त्रालय र मन्त्रालयको सूचना अधिकारीको तर्फबाट तयार भएको लिखित जवाफ तथा सो सँग सम्बन्धित कागजात यसैसाथ संलग्न गरि पठाईएको व्यहोरा अनुरोध छ ।

(सन्तोष तिमल्सिना)
शाखा अधिकृत(कानून)

फोनः 01-४२११823,01-४200442,01-४200247,फ्याक्स नं: 01-४२११७२३,01-४२११६१०
Website: www.mocit.gov.np, Email:info@mocit.gov.np
d:\सन्चार मन्त्रालय फायल\पत्रहरु.docx-

श्री राष्ट्रिय सूचना आयोगमा चढाएको
लिखित जवाफ

सम्बत् २०७७ सालको पुनरावेदन/मुद्दा नं.-----------------------------------------------------------------४२२

विषयः- सुचना उपलब्ध गराउने आदेश गरिपाउँ ।

संचार तथा सूचना प्रविधि मन्त्रालयको सूचना अधिकारी संगिता ओझा ------------लिखित जवाफ प्रस्तुतकर्ता प्रत्यर्थी

विरुद्ध

ललितपुर जिल्ला, ल.म.न.पा.-१६ निवासी रुक्शना कपाली----------------------------बिपक्षी/पुनरावेदक

पुनरावेदकले यस मन्त्रालय समेतलाई विपक्षी बनाई राष्ट्रिय सूचना आयोग समक्ष दिनु भएको सम्बत् २०७७ सालको मुद्दा नं. ४२२ को पुनरावेदनको सम्बन्धमा पुनरावेदनपत्रमा उल्लिखित सूचना उपलब्ध गराउनु भन्ने आदेश दिन नपर्नाको कुनै कारण भए सोको आधार र प्रमाण सहित बाटोको म्याद बाहेक सात दिनभित्र लिखित जवाफ पठाउनु भन्ने आदेश सहितको सूचना यस मन्त्रालयमा मिति २०७७।१२।२४ मा प्राप्त भएकोमा म्यादभित्रै निम्न बमोजिम लिखित जवाफ पेश गरेको छु ।

१. निवेदक रुक्शना कपालीले विपक्षी प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालय, सञ्चार तथा सूचना प्रविधि मन्त्रालय र संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयमा सूचना माग गरि उक्त कार्यालयहरुका कार्यालय प्रमुखलाई नेपाल संवत ११४१/०४/१६, मिति २०७७माघ २०गते पत्राचार गरि माग गरेको नेपालभाषा सम्बन्धी मन्त्रिपरिषदको निर्णयको सूचना उपलब्ध नगराएको र कुनै जवाफ समेत नदिएकोले उक्त सूचना पाउनका लागि विपक्षीका नाममा आदेश जारी गरीपाऊँ भन्ने व्यहोराको पुनरावेदनपत्र रहेछ ।

२. नेपाल सरकार, सञ्चार तथा सूचना प्रविधि मन्त्रालय संविधान तथा प्रचलित नेपाल कानूनको परिपालना गरी गराई कानूनी राज्यको अवधारणालाई साकार पार्ने र नागरिकका संविधान तथा कानून प्रदत्त हक अधिकारहरुको सम्मान, संरक्षण र सम्बर्द्धन गर्दै उपभोगको सुनिश्चितता प्रदान गर्ने एवं सम्मानित अदालत तथा अन्य न्यायिक/अर्धन्यायिक निकायहरुबाट भएका आदेशहरुको कार्यान्वयन गर्ने कुरामा कटिवद्ध रहेको छ ।

३. विपक्षी पुनरावेदकले यस मन्त्रालयको सूचना अधिकारीलाई सम्बोधन गरि नेपाल सम्बत ११४० अनला ८ मा देहायका सूचना उपलब्ध गराउनका लागि निवेदन गर्नुभएको थियो :

क. २०५२ सालमा नेवारी भाषा भन्ने शब्दको सट्टा नेपालभाषा भनि सम्बोधन गर्नुपर्ने भनि गरेको मन्त्रिपरिषदको निर्णयको प्रमाणित प्रति ।



ख. २०५५सालमा तत्कालीन सूचना तथा सञ्चार मन्त्री राधाकृष्ण मैनालीले नेपालभाषा शब्दको प्रयोग गर्न दिएको निर्देशनको प्रमाणित प्रति।

ग. यस मन्त्रालयले २०७५/०२/१७ मा Nepal Telecom Authority लाई २०७४/०२/१५ को मन्त्रिपरिषदको निर्णयबाट पारित संशोधन कार्यन्वयन सम्बन्धि गरेको निर्देशनको सम्पूर्ण पत्राचारको एक प्रमाणित प्रतिलिपि प्रदान गर्नुहोस।

४. विपक्षी पुनरावेदकले माथि बुँदा नं ३ मा उल्लेखित सूचना पाउनको लागि यस मन्त्रालय समक्ष निवेदन गरेकोमा यस मन्त्रालयले उल्लेखित विषयको सूचना यस मन्त्रालयको प्रेस तथा सूचना समन्वय शाखाको च.न. ९५ मिति २०७७/०६/०८ मा उपलब्ध गराई सोको बोधार्थ राष्ट्रिय सूचना आयोगलाई समेत दिईएको छ । त्यसैगरि विपक्षी पुनरावेदकले मिति २०७७/१०/२७ मा यस मन्त्रालयमा निवेदन दर्ता गरि माग गरेको सूचना उपलब्ध गराउनका लागि प्रधानमन्त्रि तथा मन्त्रिपरिषद्को कार्यालय समेतले यस मन्त्रालयलाई लेखेको पत्र बमोजिम यस मन्त्रालयबाट सूचना तयार गरि निजलाई उपलब्ध गराउनका लागि सुचना उपलब्ध गराउने च.न. ३२९ मिति २०७७/११/०७ को पत्र समेत तयार गरेको तर निज पुनरावेदक सुचना लिन मन्त्रालयमा उपस्थित नभएको हो सो व्यहोरा मन्त्रालयको अभिलेखबाट देखिन्छ । निजलाई उपलब्ध गराउने सूचना सम्बन्धी पत्र मन्त्रालयमा तयार रहेको छ । निज पुनरावेदक सूचना लिन नआउने र सूचना तयार हुँदाहुँदै अनावश्यक दुखःहैरानी दिने उदेश्यले दायर भएको पुनरावेदनको आधारमा आयोगबाट आदेश जारी हुनुपर्ने आधार र कारण देखिँदैन । अतः प्रस्तुत पुनरावेदन खारेज गरिपाउँ ।

लिखित जवाफ प्रस्तुतकर्ता

(संगिता ओझा)

सूचना अधिकारी

सञ्चार तथा सूचना प्रविधि मन्त्रालय

इतिसम्बत् २०७७ साल ..१२... महिना ..३१ गते रोज ....... शुभम्..................... ।

श्री राष्ट्रिय सूचना आयोगमा चढाएको

लिखित जवाफ

सम्बत् २०७७ सालको पुनरावेदन/मुद्दा नं.-------------------------------------------------------------४२२

विषयः- सुचना उपलब्ध गराउने आदेश गरिपाउँ ।

संचार तथा सूचना प्रविधि मन्त्रालयका सचिव हरिप्रसाद बस्याल----- ------------लिखित जवाफ प्रस्तुतकर्ता

प्रत्यर्थी

विरुद्ध

ललितपुर जिल्ला, ल.म.न.पा.-१६ निवासी रुक्शना कपाली------------------------------बिपक्षी/पुनरावेदक

पुनरावेदकले यस मन्त्रालय समेतलाई विपक्षी बनाई राष्ट्रिय सूचना आयोग समक्ष दिनु भएको सम्वत् २०७७ सालको मुद्दा नं. ४२२ को पुनरावेदनको सम्बन्धमा पुनरावेदनपत्रमा उल्लिखित सूचना उपलब्ध गराउनु भन्ने आदेश दिन नपर्नाको कुनै कारण भए सोको आधार र प्रमाण सहित बाटोको म्याद बाहेक सात दिनभित्र लिखित जवाफ पठाउनु भन्ने आदेश सहितको सूचना यस मन्त्रालयमा मिति २०७७।१२।२४ मा प्राप्त भएकोमा म्यादभित्रै निम्न बमोजिम लिखित जवाफ पेश गरेको छु ।

१. निवेदक रुक्शना कपालीले विपक्षी प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालय, सञ्चार तथा सूचना प्रविधि मन्त्रालय र संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयमा सूचना माग गरि उक्त कार्यालयहरुका कार्यालय प्रमुखलाई नेपाल संवत ११४१/०४/१६, मिति २०७७ माघ २० गते पत्राचार गरि माग गरेको नेपालभाषा सम्बन्धी मन्त्रिपरिषदको निर्णयको सूचना उपलब्ध नगराएको र कुनै जवाफ समेत नदिएकोले उक्त सूचना पाउनका लागि विपक्षीका नाममा आदेश जारी गरीपाऊँ भन्ने व्यहोराको पुनरावेदनपत्र रहेछ ।

२. नेपाल सरकार, सञ्चार तथा सूचना प्रविधि मन्त्रालय संविधान तथा प्रचलित नेपाल कानूनको परिपालना गरी गराई कानूनी राज्यको अवधारणालाई साकार पार्ने र नागरिकका संविधान तथा कानून प्रदत्त हक अधिकारहरुको सम्मान, संरक्षण र सम्बर्द्धन गर्दै उपभोगको सुनिश्चितता प्रदान गर्ने एवं सम्मानित अदालत तथा अन्य न्यायिक/अर्धन्यायिक निकायहरुबाट भएका आदेशहरुको कार्यान्वयन गर्ने कुरामा कटिवद्ध रहेको छ ।

३. विपक्षी पुनरावेदकले यस मन्त्रालयको सूचना अधिकारीलाई सम्बोधन गरि नेपाल सम्बत ११४० अनला ८ मा देहायका सूचना उपलब्ध गराउनका लागि निवेदन गर्नुभएको थियो :

क. २०५२ सालमा नेवारी भाषा भन्ने शब्दको सट्टा नेपालभाषा भनि सम्बोधन गर्नुपर्ने भनि गरेको मन्त्रिपरिषदको निर्णयको प्रमाणित प्रति ।



ख. २०५५सालमा तत्कालीन सूचना तथा सञ्चार मन्त्री राधाकृष्ण मैनालीले नेपालभाषा शब्दको प्रयोग गर्न दिएको निर्देशनको प्रमाणित प्रति।

ग. यस मन्त्रालयले २०७५/०२/१७ मा Nepal Telecom Authority लाई २०७४/०२/१५ को मन्त्रिपरिषदको निर्णयबाट पारित संशोधन कार्यन्वयन सम्बन्धि गरेको निर्देशनको सम्पूर्ण पत्राचारको एक प्रमाणित प्रतिलिपि प्रदान गर्नुहोस।

४. विपक्षी पुनरावेदकले माथि बुँदा नं ३ मा उल्लेखित सूचना पाउनको लागि यस मन्त्रालय समक्ष निवेदन गरेकोमा यस मन्त्रालयले उल्लेखित विषयको सूचना यस मन्त्रालयको प्रेस तथा सूचना समन्वय शाखाको च.न. ९५ मिति २०७७/०६/०८ मा उपलब्ध गराई सोको बोधार्थ राष्ट्रिय सूचना आयोगलाई समेत दिईएको छ । त्यसैगरि विपक्षी पुनरावेदकले मिति २०७७/१०/२७ मा यस मन्त्रालयमा निवेदन दर्ता गरि माग गरेको सूचना उपलब्ध गराउनका लागि प्रधानमन्त्रि तथा मन्त्रिपरिषद्को कार्यालय समेतले यस मन्त्रालयलाई लेखेको पत्र बमोजिम यस मन्त्रालयबाट सूचना तयार गरि निजलाई उपलब्ध गराउनका लागि सुचना उपलब्ध गराउने च.न. ३२९ मिति २०७७/११/०७ को पत्र समेत तयार गरेको तर निज पुनरावेदक सुचना लिन मन्त्रालयमा उपस्थित नभएको हो सो व्यहोरा मन्त्रालयको अभिलेखबाट देखिन्छ । निजलाई उपलब्ध गराउने सूचना सम्बन्धी पत्र मन्त्रालयमा तयार रहेको छ । निज पुनरावेदक सूचना लिन नआउने र सूचना तयार हुँदाहुँदै अनावश्यक दुखःहैरानी दिने उदेश्यले दायर भएको पुनरावेदनको आधारमा आयोगबाट आदेश जारी हुनुपर्ने आधार र कारण देखिँदैन । अतः प्रस्तुत पुनरावेदन खारेज गरिपाउँ ।

लिखित जवाफि प्रस्तुतकर्ता

(हरिप्रसाद बस्याल)

सचिव

सञ्चार तथा सूचना प्रविधि मन्त्रालय

इतिसम्वत् २०७७ साल ...१२... महिना ..२१.. गते रोज ..५.. शुभम्.................... ।

www.nic.gov.np

नेपाल संवत् ११४१ गुंला ८

श्री कानून अधिकृतज्यू,
सूचना आयोग,
देवीनगर, यें (काठमाडौं) ।


RD780202255NP
Lalitpur DPO (44700)
Letter (RD780202255NP)
From:rukshana kapali
Lalitpur, -
To:suchana aayog
Kathmandu, -
Weight: 22.00 Grams Cash: Rs.33.00
Date:7/26/2021 Time: 10:34 AM
OP:sunubohlip

**विषय : मिति २०७८/०३/१८ को पु.च.नं ११०३ पत्रको जवाफ सम्बन्धमा ।**

सम्बत् २०७७ सालको मुद्दा नं ४२२ को पुनरावेदन सम्बन्धमा यस सूचना आयोगको मिति २०७८/०३/१८ को पु.च.नं ११०३ रहेको पत्र मलाई नेपाल संवत् ११४१ गुंला ७ मा प्राप्त भयो । उक्त पत्र साथ सञ्चार तथा सूचना प्रविधि मन्त्रालयले यस आयोगलाई लिखित जवाफ पठाइएको सम्बन्धमा लेखेको पत्र र लिखित जवाफ पनि प्राप्त भयो ।

१. विपक्षी मन्त्रालयका सूचना अधिकारीको लिखित जवाफको बुँदा ३ मा मैले निवेदन दर्ता गरि माग गरेको सूचना केके हुन् भनि सूचिकृत गरिएको छ । उक्त बुँदामा यसरी उल्लेख भएको छ -

(क) २०५२ सालमा नेवारी भाषा भन्ने शब्दको सट्टा नेपालभाषा भनि सम्बोधन गर्नुपर्ने भनि गरेको मन्त्रीपरिषदको निर्णयको प्रमाणित प्रति,

(ख) २०५५ सालमा तत्कालीन सूचना तथा सञ्चार मन्त्री राधाकृष्ण मैनालीले नेपालभाषा शब्दको प्रयोग गर्न दिएको निर्देशनको प्रमाणित प्रति,

(ग) यस मन्त्रालयले २०७५/०२/१७ मा Nepal Telecom Authority लाई २०७४/०२/१५ को मन्त्रीपरिषदको निर्णयबाट पारित संशोधन कार्यन्वयन सम्बन्धि गरेको निर्देशनको सम्पूर्ण पत्राचारको एक प्रमाणित प्रतिलिपि ।

२. विपक्षी मन्त्रालयका सूचना अधिकारीको लिखित जवाफको बुँदा ४ मा मैले माग गरेको सूचना सो मन्त्रालयको प्रेस तथा सूचना समन्वय शाखाको च.न. ९५ मिति २०७७/०६/०८ मा उपलब्ध गराएको व्यहोरा उल्लेख भएको छ । मन्त्रालयको उक्त पत्र मैले पुनरावेदन निवेदनका साथ नै संलग्न गरेको छु । पुनरावेदन निवेदनको २.२ (ग) मा उक्त पत्र उल्लेख पनि गरेको छु । विपक्षीले बुँदा ३ को (क) र (ख) मा उल्लेख गरे अनुसार मैले निर्णय र निर्देशनको प्रमाणित प्रति माग गरेको थिएँ । तर मलाई मन्त्रालयले निर्णय र निर्देशनको प्रमाणित प्रति नभई मैले सन्दर्भ स्रोतका रूपमा टाँस गरि पठाएको गोरखापत्रको समाचारको भने प्रमाणित प्रतिलिपि गोरखापत्रबाट झिकाइ प्रदान गरिएको हो । त्यसपछि मैले मन्त्रालयलाई फेरी पत्राचार गरें । त्यसैले नेपाल संवत् ११४० अनला ८ को उक्त पत्राचारमा मैले निर्देशन सम्बन्धी समाचारको प्रमाणित प्रतिलिपि होइन कि, उक्त निर्देशनकै प्रमाणित प्रतिलिपि प्राप्त गर्न खोजेको हो भन्ने उल्लेख गरेको छु । यो निवेदन पनि मैले पुनरावेदन निवेदनका साथ संलग्न गरेको छु र पुनरावेदन निवेदनको २.२ (घ) मा उल्लेख गरेको छु । उक्त पत्रको जवाफ स्वरूप मलाई सो सूचना प्रधानमन्त्री तथा मन्त्रीपरिषद्को कार्यालयबाट

रुक्शना

1/2

लिनु भन्ने ईमेल प्राप्त भयो। मन्त्रालयको उक्त ईमेल समेत टाँस गरि मैले प्रधानमन्त्री तथा मन्त्रीपरिषद्को कार्यालयमा सूचना माग गर्दा उक्त कार्यालयका सूचना सञ्चार तथा वैदेशिक समन्वय शाखाका शाखा अधिकृतबाट मिति २०७७/०७/१८ उल्लेख भएको चलानी नम्बर सु.स.वै./५१२/१८१२ को पत्र प्राप्त भयो। यो पत्र पनि मैले पुनरावेदन निवेदनका साथ संलग्न गरेको छु र निवेदनको २.२ (छ) मा उल्लेख पनि गरेको छु। उक्त पत्रमा फेरी मैले माग गरेको सूचना सञ्चार तथा सूचना प्रविधि मन्त्रालयसँग सम्बन्धित देखिएकाले सोही निकायबाट प्राप्त गर्न अनुरोध भएको व्यहोरा उल्लेख थियो। मन्त्रालयले मन्त्रीपरिषद्को कार्यालय र मन्त्रीपरिषद्को कार्यालयले मन्त्रालयलाई देखाउने भएकाले दुबै कार्यालयलाई संयुक्त निवेदन पठाएँ।

३. विपक्षी मन्त्रालयका सूचना अधिकारीको लिखित जवाफको बुँदा ४ मा नै मैले मिति २०७७/१०/२७ मा उक्त मन्त्रालयमा निवेदन दर्ता गरि माग गरेको सूचना उपलब्ध गराउनका लागि प्रधानमन्त्री तथा मन्त्रीपरिषद्को कार्यालय समेतले उक्त मन्त्रालयलाई लेखेको पत्र बमोजिम मन्त्रालयले मिति २०७७/११/०७ च.नं. ३२९ को पत्र समेत तयार गरेको तर सूचना लिन म पुनरावेदक मन्त्रालयमा उपस्थित नभएको भनि उल्लेख गरिएको छ। मन्त्रालयको मिति २०७७/११/०७ च.नं. ३२९ को पत्र मैले हुलाक मार्फत् नै पाइसकेको छु। त्यसैले मन्त्रालयमा उपस्थित भइरहनुपर्ने कारण भएन। तर उक्त पत्रमा पनि मैले माग गरेको सूचना मलाइ प्रदान गरिएन। सो पत्र मैले माग गरेको सूचना मन्त्रालयसँग सम्बन्धित भएको देखिँदैन भन्ने व्यहोराको छ। यो पत्र मैले यस आयोगमा पुनरावेदन पत्र पठाइसकेपछि मात्र प्राप्त गरेको हुँ।

४. विपक्षी मन्त्रालयका सचिवको लिखित जवाफमा पनि विपक्षी मन्त्रालयका सूचना अधिकारीको लिखित जवाफ भन्दा फरक व्यहोरा देखिएन।

५. विपक्षीहरू लिखित जवाफको बुँदा ३ (ग) मा उल्लेख सूचनाको माग यस पुनरावेदनसँग सम्बन्धित छैन।

अन्ततः मैले माग गरेको सूचना विपक्षी कार्यालयहरूबाट प्राप्त नभएको जानकारी गराउन चहान्छु।

**संलग्न :** सञ्चार तथा सूचना प्रविधि मन्त्रालयको मिति २०७७/११/०७ च.नं. ३२९ को पत्र - पाना १, र सो पत्रलाई हुलाकबाट पठाइएको खाम - पाना १।

**भवदीय,**

सम्बत् २०७७ सालको मुद्दा नं ४२२ को पुनरावेदक रुक्शना कपाली।

2/2

नेपाल संवत् ११४१ गुंला ८




श्री कानून अधिकृतज्यू,
सूचना आयोग,
देवीनगर, यैं (काठमाडौं) ।

**विषय : सम्बत् २०७७ सालको मुद्दा नं ४२२ को पुनरावेदनको पूरक सम्बन्धमा ।**

सम्बत् २०७७ सालको मुद्दा नं ४२२ को पुनरावेदन निवेदनमा थप जानकारी र व्याख्या पनि आवश्यक महसुस भएको हुनाले यस पत्र मार्फत् उक्त पुनरावेदन निवेदनको पूरक निवेदन पठाउँदैछु ।

संलग्न : पूरक निवेदन – पाना ६

**भवदीय,**

सम्बत् २०७७ सालको मुद्दा नं ४२२ को पुनरावेदक रुक्शना कपाली ।

श्री राष्ट्रिय सूचना आयोगमा पेश गरिएको

पूरक निवेदन

सम्वत् २०७७ सालको पुनरावेदन / मुद्दा नं ................................................................. ४२२

**विषय : सूचना उपलब्ध गराउने आदेश गरिपाउँ ।**

ललितपुर जिल्ला ललितपुर महानगरपालिका वडा नं १६ बस्ने वर्ष २१ को रुक्शना कपाली ...... १

**विरुद्ध**

प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयका कार्यालय प्रमुख समेत ............................................ १

१. २०५२ सालमा 'नेपाल भाषा' भनि सम्बोधन गर्नुपर्ने भनि गरेको मन्त्रीपरिषद्को निर्णयको प्रमाणित प्रति सम्बन्धीको घटनाक्रमको चर्चा :

१.१ नेपाल संवत् ११४० दिल्ला ३ मिति उल्लेख भएको पत्र मैले हुलाक मार्फत् प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयका सूचना अधिकारीलाई पत्राचार गरें । उक्त पत्रको हुलाक टिकट नं RD765802314NP रहेको छ । सो पत्रमा मैले देहाय उल्लेख गरि सूचना माग गरेको थिएँ ।

*"सामाजिक संजालमा The Rising Nepal पत्रिकामा मिति 9 September 1995 र 14 November 1998 मा यस मन्त्रीपरिषदले "नेवारी भाषा"को सट्टा "नेपालभाषा" भन्नुपर्ने भनी निर्णय गरेको भन्ने बुझिएको हुँदा त्यस्तो कुनै निर्णय भएको छ कि छैन, र छ भने उक्त निर्णयको एक प्रति उपलब्ध गराईदिन हुन अनुरोध गर्दछु । The Rising Nepal को प्रकाशन भनी सामाजिक संजालमा व्यापक सयेर भएको उक्त news clippings हरू पनि यसै पत्र साथ संलग्न गर्दछु ।"*

१.२ मैले प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयका सूचना तथा वैदेशिक समन्वय शाखाका शाखा अधिकृतबाट चलानी नम्बर सू.स.वै./५१२/६३६३ को मिति २०७७/०३/१७ उल्लेख भएको पत्र प्राप्त गरें । उक्त पत्रमा मैले माग गरेको सूचना संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयसँग सम्बन्धित रहेको र सोही मन्त्रालयबाट लिनुहुन आदेशानुसार अनुरोध भनि उल्लेख भएको थियो ।

१.३ नेपाल संवत् ११४० दिल्ला १४ मिति उल्लेख भएको पत्र मैले हुलाक मार्फत् संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका सूचना अधिकारीलाई पत्राचार गरें । उक्त पत्रको हुलाक टिकट नं RD765950525NP। रहेको छ । सो पत्रमा मैले देहाय उल्लेख गरि सूचना माग गरेको थिएँ ।

रुक्शना

१

*"सामाजिक संजालमा The Rising Nepal पत्रिकामा मिति 9 September 1995 र 14 November 1998 मा यस मन्त्रीपरिषदले "नेवारी भाषा"को सट्टा "नेपालभाषा" भन्नुपर्ने भनी निर्णय गरेको भन्ने बुझिएको हुँदा त्यस्तो कुनै निर्णय भएको छ कि छैन, र छ भने उक्त निर्णयको एक प्रति उपलब्ध गराईदिन हुन अनुरोध गर्दै प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयलाई लेखिएको निवेदनको उत्तर मिति २०७७/०३/१७ मा प्राप्त भएकोमा उक्त सूचना यस मन्त्रालयबाट लिन आदेशानुसार अनुरोध गरिएको हुनाले यस मान्त्रालयबाट उक्त सूचनाको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन अनुरोध गर्दछु । The Rising Nepal को प्रकाशन भनी सामाजिक संजालमा व्यापक सयेर भएको उक्त news clippings हरू र प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयबाट आएको पत्र पनि यसै पत्र साथ संलग्न गर्दछु ।"*

१.४ संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयबाट पत्राचार उपर कुनै जवाफ प्राप्त नभएपछि नेपाल संवत् ११४० यंला २७ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् मन्त्रालयका सचिवलाई माग गरिएको सूचना सम्बन्धि जवाफ नआएको भनि पुनः सूचना माग गरें । उक्त पत्रको हुलाक टिकट नं RD770810446NP रहेको छ । सो पत्रमा मैले देहाय उल्लेख गरेको थिएँ ।

*"उपरोक्त सम्बन्धमा मैले मिति नेसं ११४० दिल्ला १४ उल्लेख गरिएको विषय सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भनी २०७७ असार ३१ गते हुलाक कार्यालयबाट निवेदन पठाको र हुलाक कार्यालयको Domestic Tracking Website अनुसार असार २३ गते निवेदन सिंह दरबारमा प्राप्त गरिसकेको देखाइएको तर आज भाद्र २९ (यंला २७) हुँदा सम्म पनि उक्त निवेदनको कुनै जवाफ न-आएकाले मेरो माग बमोजिमको सूचना प्रदान गर्न अनुरोध गर्दै यो निवेदन पेश गर्दछु । सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गरिएको उक्त निवेदनको प्रति यसै पत्रसाथ संलग्न गरेको छु ।"*

१.५ मैले संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका प्रशासन शाखाका शाखा अधिकृतबाट चलानी नम्बर २८९ को मिति २०७७/०६/२० उल्लेख भएको पत्र प्राप्त गरें । उक्त पत्र अनुसार मैले माग गरेको सूचनाको विषय २०५२ सालको आसपास भएको तर उक्त मन्त्रालयलाई २०५७ सालमा देखि मात्र संस्कृति क्षेत्रको समेत कार्य गर्ने गरी जिम्मेवारी तोकिएको र २०५७ भन्दा अघि संस्कृतिसँग सम्बन्धित अभिलेख त्यहाँ नरहेको व्यहोरा उल्लेख भएको छ ।

१.६ नेपाल संवत् ११४१ कछला १ मिति उल्लेख भएको पत्र मैले हुलाक मार्फत् संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका कार्यालय प्रमुखलाई सूचना माग गरि पत्राचार

२

ग्र२कृति

गरें । उक्त पत्रको हुलाक टिकट नं RD771437080NP रहेको छ । सो पत्रमा मैले देहाय उल्लेख गरि सूचना माग गरेको थिएँ ।

*"उपरोक्त सम्बन्धमा मैले सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भनी हुलाकद्वारा पठाएको पत्र यहाँलाई प्राप्त भई च.नं. २८९ रहेको पत्र मिति २०७७/०६/२० द्वारा पठाइएको जवाफ चित्त बुझेन । मिति २०७७/०३/१७ सु.स.वै. / ५१२ / ७३६३ द्वारा प्रधानमन्त्री तथा मन्त्रीपरिषद कार्यालयले पठाएको पत्र अनुसार उक्त सूचना यही मन्त्रालयसँग सम्बन्धित रहेको जानकारी गराइएको छ । तहाँको च.नं. २८९ (२०७७/०६/२०) द्वारा प्राप्त पत्र अनुसार उक्त सूचना यस मन्त्रालयसँग नरहे कुन निकाय/मन्त्रालय/कार्यालयसँग रहेको व्यहोरा पनि खुलाइदिनहुन अनुरोध गर्दछु ।"*

१.७ अन्ततः नेपाल संवत् ११४१/०४/१६ मिति उल्लेख भएको पत्र मैले हुलाक मार्फत् संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय (हुलाक टिकट नं RD773258355NP) एवं प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालय (हुलाक टिकट नं RD773258320NP) दुबै कार्यालयका प्रमुखलाई संयुक्त पत्र पठाएँ । उक्त निवेदनमा मैले यहाँसम्मको सबै घटनाक्रम व्याख्या गरें । र अन्तिममा मैले देहाय उल्लेख गरेको छु ।

*"यस कार्यालयहरूमा सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गरेको सन्दर्भमा सत्य, तथ्य के हो? गोरखापत्रमा प्रकाशित समाचारले मन्त्रीपरिषदको कार्यालयलाई इङ्गित गर्दछ । मन्त्रीपरिषदको कार्यालयको जवाफमा संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय इङ्गित गरिएको छ । संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयको जवाफमा कोही इङ्गित गरिएको छैन । यो सूचना वास्तवमा को सँग सम्बन्धित हो ? मैले कुन निकायमा यो सूचना लिनुपर्ने हो ?"*

२. २०५५ सालमा तत्कालीन सूचना तथा सञ्चार मन्त्री राधाकृष्ण मैनालीले 'नेपालभाषा' शब्दको प्रयोग गर्न दिएको निर्देशनको प्रमाणित प्रति सम्बन्धीको घटनाक्रमको चर्चा :

२.१ नेपाल संवत् ११४० दिल्ला ३ मिति उल्लेख भएको पत्र मैले हुलाक मार्फत् सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका सूचना अधिकारीलाई पत्राचार गरें । उक्त पत्रको हुलाक टिकट नं RD765802305NP रहेको छ । सो पत्रमा मैले देहाय उल्लेख गरि सूचना माग गरेको थिएँ ।

*"सामाजिक संजालमा The Rising Nepal पत्रिकामा 14 November 1998 मा यस मन्त्रालयले "नेवारी भाषा"को सट्टा "नेपालभाषा" भनी आम सञ्चारलाई निर्देशन दिएको भन्ने बुझिएको हुँदा त्यस्तो कुनै निर्णय भएको छ कि छैन, र छ भने उक्त निर्णयको एक प्रति उपलब्ध गराईदिन हुन अनुरोध गर्दछु । The Rising Nepal को प्रकाशन भनी सामाजिक संजालमा व्यापक सयेर भएको उक्त news clippings हरू पनि यसै पत्र साथ संलग्न गर्दछु ।"*

ग्र२कृति.

३

२.२ सञ्चार तथा सूचना प्रविधि मन्त्रालयबाट पत्राचार उपर कुनै जवाफ प्राप्त नभएपछि नेपाल संवत् ११४० यंला २७ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् मन्त्रालयका सचिवलाई माग गरिएको सूचना सम्वन्धि जवाफ नआएको भनि पुनः सूचना माग गरें । उक्त पत्रको हुलाक टिकट नं RD770810446NP रहेको छ । सो पत्रमा मैले देहाय उल्लेख गरेको थिएँ ।

*"उपरोक्त सम्बन्धमा मैले मिति नेसं ११४० दिल्ला ३ उल्लेख गरिएको विषय सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भनी २०७७ असार १० गते हुलाक कार्यालयबाट निवेदन पठाको र हुलाक कार्यालयको Domestic Tracking Website अनुसार असार १४ गते निवेदन सिङ्ह दरवारमा प्राप्त गरिसकेको देखाइएको तर आज भाद्र २१ (यंला २७) हुँदा सम्म पनि उक्त निवेदनको कुनै जवाफ न-आएकाले मेरो माग बमोजिमको सूचना प्रदान गर्न अनुरोध गर्दै यो निवेदन पेश गर्दछु । सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गरिएको उक्त निवेदनको प्रति यसै पत्रसाथ संलग्न गरेको छु ।"*

२.३ सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका प्रेस तथा सूचना समन्वय शाखाका शाखा अधिकृतबाट मिति २०७७/०६/०८ उल्लेख भएको चलानी नम्बर प्रेस-२२/९५ रहेको पत्र मार्फत् सूचना उपलब्ध गराइएको व्यहोराको पत्र मलाई प्राप्त भयो । उक्त पत्रमा गोरखापत्र संस्थानबाट मैले निवेदनमा जिकिर गरेको समाचारहरूको प्रमाणित प्रतिलिपि उपलब्ध गराएका थिए । सो विवरण मैले माग गरेको सूचना भन्दा फरक भयो । त्यसैले नेपाल संवत् ११४० अनला ८ मिति उल्लेख गरिएको पत्रबाट सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई मैले त्यहाँबाट प्राप्त गरेको उक्त पत्रमा माग गरिएको सूचना छैन र मैले माग गरेको सूचना के हो भनि खुलाई पुनः निवेदन गरें । उक्त पत्रको व्यहोरा यस्तो रहेको छ ।

*"उपरोक्त सम्बन्धमा मैले सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भनी यहाँलाई पठाएको पत्रको आज पसं ०७७/७८, चनं प्रेस-२२/९५ मार्फत मैले सूचना प्राप्त गरें । मैले उक्त सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गर्दा कुन र कहिलेको निर्णय हो भन्ने सन्दर्भ आइयोस् भनेर The Rising Nepal को समाचारको प्रति टाँस गरेको हुँ । मलाई आवश्यक रहेको सूचना यहाँले पठाए अनुसार सञ्चार मन्त्री श्री राधाकृष्ण मैनालीज्यूले सरकारी संचार माध्यमहरूलाई गर्नुभएको निर्देशन सम्बन्धी समाचारको प्रमाणित प्रतिलिपि होइन कि, उक्त निर्देशनकै प्रमाणित प्रतिलिपि प्राप्त गर्न खोजेको हो । सञ्चार मन्त्री श्री राधाकृष्ण मैनालीज्यूले सरकारी संचार माध्यमहरूलाई "नेवारी भाषा" नभई "नेपाल भाषा" भनी समाचार प्रकाशित गर्ने सम्बन्धीको निर्देशनको प्रति मेरो व्यक्तिगत अध्ययन प्रयोजनको लागि आवश्यक परेको जानकारी गराउँदै उक्त सूचना नेपालको संविधानको धारा २७ तथा सूचनाको हक सम्बन्धि ऐन, २०६४ को दफा ३*

४

र ७ अनुसार ती सूचना तथा जानकारीको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन यो निवेदन गर्दछु ।"

२.४ 25 September 2020 (मिति २०७७ असोज ९) मा मैले सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका सूचना अधिकारीको ईमेल प्राप्त गरें । उक्त ईमेलमा माग गरिएको सूचना प्रधानमन्त्री तथा मन्त्रीपरिषद्को कार्यालयबाट लिनु भन्ने व्यहोरा उल्लेख भयो ।

२.५ मैले नेपाल संवत् ११४१ कछला १ मिति उल्लेख भएको पत्र हुलाक मार्फत् प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयका सूचना अधिकारीलाई सूचना माग गरि पठाएँ । उक्त पत्रको हुलाक टिकट नं RD771437120NP रहेको छ । सो पत्रमा मैले देहाय उल्लेख गरेको थिएँ ।

*"तत्कालीन संचार मन्त्री श्री राधा कृष्ण मैनालीज्यूले सरकारी संचार माध्यमहरूलाई नेवारी भाषालाई 'नेपाल भाषा' भनी समाचार प्रकाशित गर्ने सम्बन्धी भएको निर्देशनको प्रमाणित प्रति पाउँ । उक्त विषय सम्बन्धी गोरखापत्र संस्थानबाट प्रकाशित भएको समाचारको प्रमाणित प्रति पनि यसै पत्र साथ संलग्न छ । उक्त विषयमा सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई सूचना माग गर्दा तहाँबाट यस निर्देशन मन्त्रीपरिषदबाट भएको हुनाले त्यहाँबाटै सूचना माग्नु भनी इमेल मार्फत दिइएको जवाफ पनि यसै पत्र साथ संलग्न छ ।"*

२.६ मलाई प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयका सूचना सञ्चार तथा वैदेशिक समन्वय शाखाका शाखा अधिकृतबाट मिति २०७७/०७/१८ उल्लेख भएको चलानी नम्बर सु.स.वै./५१२/१८१२ को पत्र प्राप्त भयो । उक्त पत्रमा मलाई मैले माग गरेको सूचना सञ्चार तथा सूचना प्रविधि मन्त्रालयसँग सम्बन्धित देखिएकाले सोही निकायबाट प्राप्त गर्न अनुरोध भएको व्यहोरा उल्लेख थियो ।

२.७ अन्ततः नेपाल संवत् ११४१/०४/१६ मिति उल्लेख भएको पत्र मैले हुलाक मार्फत् सञ्चार तथा सूचना प्रविधि मन्त्रालय (हुलाक टिकट नं RD773258293NP) एवं प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालय (हुलाक टिकट नं RD773258231NP) दुबै कार्यालयका प्रमुखलाई संयुक्त पत्र पठाएँ । उक्त निवेदनमा मैले यहाँसम्मको सबै घटनाक्रम व्याख्या गरें । र अन्तिममा मैले देहाय उल्लेख गरेको छु ।

*"यस कार्यालयहरूमा सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि माग गरेको सन्दर्भमा सत्य तथ्य के हो ? गोरखापत्रमा प्रकाशित समाचारले सञ्चार मन्त्रालयलाई इङ्गित गर्दछ । मन्त्रालयको जवाफमा मन्त्रीपरिषदको कार्यालय इङ्गित गरिएको छ । मन्त्रीपरिषदको कार्यालयको जवाफमा पुनः मन्त्रालय इङ्गित गरिएको छ । यो सूचना वास्तवमा को सँग सम्बन्धित हो ? मैले कुन निकायमा यो सूचना लिनुपर्ने हो ?"*

५

२.८ प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयका सूचना सञ्चार तथा वैदेशिक समन्वय शाखाका सूचना अधिकारीबाट मिति २०७७/११/०४ चनं सु.स.वै. ५१२/३७३८ रहेको पत्र प्राप्त गरें । उक्त पत्रमा प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयले सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई मैले माग गरेको सूचना उपलब्ध गराउन प्रयोजनार्थ पठाइएको व्यहोरा उल्लेख छ ।

२.९ सञ्चार तथा सूचना प्रविधि मन्त्रालयका प्रेस तथा सूचना समन्वय शाखाका शाखा अधिकृतबाट मिति २०७७/११/०७ चनं प्रेस-२२/३२९ रहेको पत्र प्राप्त गरें । उक्त पत्रमा प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयले सूचना उपलब्ध गराउने प्रयोजनार्थ भन्ने व्यहोरा सहितको पत्र पठाइएको तर यस मन्त्रालयको अभिलेखमा सो विषयसँग सम्बन्ध निर्णय भएको नदेखिएको एवं नेपाल सरकार (कार्य सम्पादन) नियमावली, २०६४ को नियम २९, ३२, ३३ र ४० आकर्षित हुने व्यहोरा उल्लेख गरिएको छ ।

३. माथि उल्लेख भएका सबै पत्राचारहरू पुनरावेदन निवेदनका साथै पठाइएका थिए । पुनरावेदन निवेदनका साथै सन्दर्भाधारका रूपमा गोरखापत्रमा प्रकाशित समाचार समेत संलग्न गरेको छु । यस पूरक निवेदन मार्फत् मुद्दासम्मको घटनाक्रम र मैले किन कसरी माग गरिएको सूचना प्राप्त गरिनँ भन्ने व्याख्या गरेको छु । यस मुद्दामा सूचना नदिनुका साथै सूचना को-सँग सम्बन्धित हो, कसको अभिलेखमा हुनुपर्ने हो, एक कार्यालयले अर्कोलाई औँल्याएर हामीसँग सम्बन्धित छैन भनेर मलाई यताबाट उता घुमाउने गरेको छ ।

४. यस पूरक निवेदनलाई पनि पुनरावेदन निवेदनको अभिन्न अङ्ग मानिपाउँ ।

निज रुक्शना कपाली

नेपाल संवत् ११४१ गुँला ७;
इति सम्वत् २०७८ साल साउन महिना १० गते रोज १ शुभम् ..................



६



# राष्ट्रिय सूचना आयोग

का. म. न. पा.-१०, बानेश्वर, देवीनगर





प. सं. ०७८/७९

पु. च. नं. २८२

च. नं. ............

मिति २०७८।०४।३१

विषय :- सूचना उपलब्ध गराउने सम्बन्धमा ।

श्री प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय
सिंहदरबार, काठमाडौं

उपरोक्त विषयमा ललितपुर जिल्ला, ल. म. पा.-१६ निवासी रुक्शना कपालीले तहाँ कार्यालयमा 'नेवार भाषा' को सट्टामा 'नेपाल भाषा' प्रयोग गर्ने गराउने सम्बन्धमा भएको निर्णयको प्रतिलिपि माग गरेकोमा तहाँ कार्यालयले सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई च. नं. सु. स. वै./५१२/३७३८ मिति २०७७।११।०४ को पत्रमा तत्कालीन सूचना तथा सञ्चार मन्त्रालयको प्रस्तावमा मिति २०५२।०५।२२ गतेको मन्त्रिपरिषद् बैठकले सञ्चार माध्यमबाट विभिन्न भाषामा कार्यक्रम सञ्चालन गर्ने क्रममा नेवार भाषा भन्ने शब्दको सट्टा नेपालभाषा भन्ने निर्णय गरेको देखिएकोले निवेदकलाई नियमानुसार सोही मन्त्रालयबाट सूचना उपलब्ध गराउन लेखेको रहेछ । त्यस पश्चात सूचना मागकर्ताले सञ्चार तथा सूचना प्रविधि मन्त्रालयमा सूचना माग गर्दा यसै साथ संलग्न उक्त मन्त्रालयको च. नं. प्रेस २२/३२९ मिति २०७७।११।०७ को पत्रमा उक्त मन्त्रालयको अभिलेखमा सो विषयसँग सम्बद्ध निर्णय भएको नदेखिएको एवं नेपाल सरकार (कार्य सम्पादन) नियमावली, २०६४ को नियम २९, ३२, ३३ र ४० मा भएको व्यवस्थाहरु अभिलेख व्यवस्थापनसँग आकर्षित हुने देखिएको भनी सूचना मागकर्तालाई जानकारी दिएको अवस्था छ । तसर्थ माथि उल्लेखित तहाँ कार्यालयबाट लेखिएको पत्रमा उल्लेख भएको निर्णय सञ्चार तथा सूचना प्रविधि मन्त्रालयको अभिलेखमा नदेखिएको भनिएबाट तहाँ कार्यालयबाट यस विषयमा स्पष्ट गराई वा निर्णयको प्रतिलिपि उपलब्ध गराई वा मन्त्रालयमार्फत सूचना उपलब्ध गराई दिने व्यवस्था हुन निर्देशानुसार अनुरोध छ ।

(विश्वबन्धु पौडेल)
उपसचिव

बोधार्थ :-

१. सञ्चार तथा सूचना प्रविधि मन्त्रालय, सिंहदरबार ।

२. श्री रुक्शना कपाली
ल. म. पा.-१६, ललितपुर
मो. नं. ९८०८२६२६९९

सूचना लिने दिने संस्कृतिको बिकास गरौं
सूचना नपाए उजुरी गरौं, पाए जानकारी गराऔं ।

फोन नं. ०१४४६४४९२, ०१४४९६५४४ ...

 नेपाल भाषा नामको औपचारिक पुनःस्थापना सम्बन्धी सूचनाको हकद्वारा प्राप्त मन्त्रीपरिषद्को निर्णय: रुक्शना कपाली



नेपाल सरकार

# प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय

सूचना सञ्चार तथा वैदेशिक समन्वय शाखा

सिंहदरबार, काठमाडौं
नेपाल ।

पत्र संख्या: ०७८/७९
च.नं.: - सु.स.वै./५१२/७३६




मितिः २०७८/०५/०२

श्री सञ्चार तथा सूचना प्रविधि मन्त्रालय,
सिंहदरबार, काठमाडौं ।

विषयः सूचना सम्बन्धमा ।

तहाँको च.नं प.सं प्रेस २२/३२९ मिति २०७७/११/०७ को पत्रबाट नेवार भाषाको सट्टा नेपाल भाषा प्रयोग गर्ने गराउने सम्बन्धमा भएको निर्णय तथा त्यसको कार्यान्वियनको सम्बन्धमा माग गरेको सूचना उपलब्ध गराउने सम्बन्धमा अभिलेखमा सो विषयसँग सम्बद्ध निर्णय भएको नदेखिएको समेत भनि पत्राचार भएको देखिन्छ ।

उक्त पत्राचारपश्चात् निवेदकले राष्ट्रिय सूचना आयोगमा निवेदन गरी राष्ट्रिय सूचना आयोगबाट सञ्चार तथा सूचना प्रविधि मन्त्रालयको अभिलेखमा नदेखिएको भनिएबाट तहाँ कार्यालयबाट यस विषयमा स्पष्ट पराई वा निर्णयको प्रतिलिपि उपलब्ध गराई वा मन्त्रालयमार्फत् सूचना उपलब्ध गराइदिने व्यवस्था हुन अनुरोध भई आएको र प्रस्तुत विषयको प्रस्ताव तथा कार्यान्वियन तहाँ मन्त्रालयबाट नै हुने र नेपाल सरकार (कार्य विभाजन) नियमावली, २०७४ को अनुसूची २ को क्रम संख्या १९ को देहाय ५ बमोजिम तहाँ मन्त्रालयबाट नै सम्पादन हुने विषय भएकोले निवेदकले माग गरेको विषयमा अभिलेख भिडाई तहाँबाट नै आवश्यक कारवाही हुन पुनः अनुरोध गरिन्छ ।

<u>बोधार्थः</u>

श्री राष्ट्रिय सूचना आयोग, देवीनगर, नयाँबानेश्वर, काठमाडौं ।

(कविता फुयाल)
सूचना अधिकारी

टेलिफोन : ४२११०६३, ४२११०२१, ४२११०७७, ४२११०६६
फ्याक्स : ४२११०६५, ४२११०८६, ४२११०३८, ४२११०२१, ४२११०४७, पो.ब.नं. : २३३१२, काठमाडौं
इमेल : info@opmcm.gov.np
वेब साइट : http://www.opmcm.gov.np



Rukshana Kapali <rukshana.newa@gmail.com>

**Fwd: Suchana**

2 messages

**Bhojendra Basnet** <basnet.bhojendra@gmail.com> Wed, Aug 25, 2021 at 1:44 PM
To: rukshana.newa@gmail.com



**Bhojendra Basnet**

**More information available at:**

https://basnetbhojendra.com.np/

**Or scan the QR code**



---------- Forwarded message ---------
From: <kabita.phuyal@nepal.gov.np>
Date: Wed, Aug 25, 2021 at 11:56 AM
Subject: Suchana
To: <ruksana.newa@gmail.com>
Cc: <basnet.bhojendra@gmail.com>

Please find the attached document

Kabita Phuyal
Information Officer
OPMCM



**1629446846498.jpg**
3427K

**Rukshana Kapali** <rukshana.newa@gmail.com> Wed, Aug 25, 2021 at 2:55 PM
To: Bhojendra Basnet <basnet.bhojendra@gmail.com>

Received with thanks.
[Quoted text hidden]
--
रुक्शना कपाली Rukshana Kapali (She, Her)
https://minchyaameyju.wordpress.com/

नेपाल संवत् ११४१ यंला १८

श्री सूचना अधिकारीज्यू,
सूचना आयोग,
यें (काठमाडौं) ।




Lalitpur DPO (44700)
Letter (RD780949042NP)
From:rukshana kapali
Lalitpur, -
To:suchana aayog
Kathmandu, -
Weight: 16.00 Grams Cash: Rs.28.00
Date:9/5/2021 Time: 10:41 AM
OP:sunubohltp

विषय : जानकारी पाउँ भनि ।

महोदय,

उपरोंक्त सम्बन्धमा मैले यस आयोगमा दर्ता गरेको पुनरावेदन निवेदन २०७७/७८ सालको मुद्दा नं ४२२ को कामकारवाही कता पुगेको छ र त्यसको अहिले स्थिति के छ भन्ने बारे जानकारी पाउँ ।

मैले दुई महिना अघि उक्त मुद्दाको लागि पूरक निवेदन एवं सञ्चार तथा सूचना प्रविधि मन्त्रालयले मुद्दा सम्बन्धी दर्ता गराएको लिखित जवाफको प्रति-उत्तर लेखेर पठाएको थिएँ । मैले यो बीच प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयले सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई पठाएको र यस आयोगलाई समेत बोधार्थ जनाएको मिति २०७८/०५/०२ को चलानी नं सु.स.वै./५१२/७३६ रहेको पत्र मिति २०७८ भदौ ९ मा ईमेल मार्फत् प्राप्त गरें ।

भवदीय,

रुक्शना कपाली
लपुमनपा-१६, ललितपुर
९८०८२६२६९९

मिति नेपाल संवत् ११४२/०१/२६

श्री कानून अधिकृतज्यू,
सूचना आयोग,
यैं (काठमाडौं) ।




विषय : सूचना उपलब्ध गराइपाउँ ।

महोदय,

उपरोक्त सम्बन्धमा मैले यस आयोगमा दर्ता गरेको पुनरावेदन निवेदन २०७७/७८ सालको मुद्दा नं ४२२ को कामकारवाही कता पुगेको छ र त्यसको अहिले स्थिति के छ ? यस मुद्दामा आयोगद्वारा के निर्णय भएको छ ?

मैले तहाँ आयोगको कारण देखाउ आदेश तथा विपक्षीहरूको लिखित जवाफ पाइसकेको छु भने विपक्षीहरूको लिखित जवाफको प्रति-उत्तर पनि पठाइसकेको छु ।

मैले माग गरेको सूचना प्राप्त भएको छैन, उपलब्ध गराइदिनु ।

भवदीय,

रुक्शना कपाली
लपुमनपा-१६, ललितपुर
९८०८२६२६९९



# राष्ट्रिय सूचना आयोग



का. म. न. पा.-१०, बानेश्वर, देवीनगर



प. सं. ०७७/७८

पु. च. नं. 806

च. नं. ............

मिति २०७८।०७।२९

**विषय :- निर्णयको प्रतिलिपि उपलब्ध गराई दिने सम्बन्धमा ।**

श्रीमान् सचिवज्यू
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय
सिंहदरबार, काठमाडौं

ललितपुर जिल्ला, ल. म. पा.-१६ निवासी रुक्शना कपालीले यस आयोगमा दर्ता गरेको पुनरावेदन मुद्दा नं. ४२२/०७७/७८ का सन्दर्भमा तहाँ मन्त्रालयको मिति २०७७।१२।३१ को लिखित जवाफ तथा पुनरावेदकको पटक पटकको निवेदनका आधारमा सूचना उपलब्ध गराउन सहजीकरणका लागि श्री प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयलाई मिति २०७८।०४।३१ मा यस आयोगबाट पत्राचार (बोधार्थ तहाँ पठाएको छ) गरिएकोमा प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयको च. नं. सू. स. वै./५१२/७३६ मिति २०७८।०५।०२ को तहाँ मन्त्रालयलाई लेखिएको पत्रको बोधार्थ यस आयोगमा प्राप्त हुन आएको छ । पुनरावेदकले हालसम्म माग गरेको सूचना नपाएको भनी यस आयोगमा निवेदन गरिरहेको छ । प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयको पत्रबाट उक्त सूचना उपलब्ध गराउने जिम्मेवारी सञ्चार तथा सूचना प्रविधि मन्त्रालयको रहेको स्पष्ट हुन्छ । तसर्थ सूचना मागकर्ताले माग गरेको सूचना 'तत्कालीन सूचना तथा सञ्चार मन्त्रालयको प्रस्तावमा मिति २०५२।०५।२२ गतेको मन्त्रिपरिषद् बैठकले सञ्चार माध्यमबाट विभिन्न भाषामा कार्यक्रम सञ्चालन गर्ने क्रममा नेवार भाषा भन्ने शब्दको सट्टा नेपालभाषा भन्ने निर्णय' को प्रमाणित प्रतिलिपि सूचना मागकर्ता पुनरावेदकलाई उपलब्ध गराउनु हुन निर्देशानुसार अनुरोध गर्दछु ।

(विश्वबन्धु पौडेल)
उपसचिव

**बोधार्थ :-**

१. श्रीमान् मुख्य सचिवज्यू,
नेपाल सरकार ।

२. श्री रुक्शना कपाली
ल. म. पा.-१६, ललितपुर
मो. नं. ९८०८२६२६९९

सूचना लिने दिने संस्कृतिको विकास गरौं
सूचना नपाए उजुरी गरौं, पाए जानकारी गराऔं ।

फोन नं: ०१४४६४४१२, ०१४४९६५४४ फ्याक्स: ०१४४९६५४५, ईमेल: info@nic.gov.np वेबसाईट: www.nic.gov.np

मितिः नेपाल संवत् ११४२ थिंला २९

श्री सूचना आयोग,
यें (काठमाडौं) ।

RD782756549NP
GPOKathmandu (44600)
Letter (RD782756549NP)
From:ruksana kapali
Lalitpur, nepal
To:shree suchana aayog
Kathmandu, k
Weight: 10.00 Grams Cash: Rs.28.00
Date:12/17/2021 Time: 12:35 PM
OP:sabreenagates

विषय : माग गरिएको सूचनाको पुनःस्मरण ।

उपरोक्त सम्बन्धमा मैले यस आयोगमा दर्ता गराएको मुद्दा नं ४२२ / ०७७ / ०७८ का सन्दर्भमा यहाँले सञ्चार तथा सूचना प्रविधि मन्त्रालयलाई मिति २०७८/०४/३१ र २०७८/०७/२९ मा दिएको निर्देशनको प्रतिलिपि प्राप्त गरें ।

यसै सन्दर्भमा म यस आयोगलाई स्मरण गराउन चाहन्छु कि मैले पुनरावेदन निवेदनमा दुईवटा सूचनाको माग गरेको थिएँ । पुनरावेदनको १. (क) मा २०५२ सालमा 'नेवारी भाषा' भन्ने सट्टा 'नेपाल भाषा' भनि सम्बोधन गर्नुपर्ने मन्त्रीपरिषद्को निर्णय र १. (ख) मा २०५५ सालमा तत्कालीन सूचना तथा सञ्चार मन्त्री राधाकृष्ण मैनालीद्वारा 'नेपाल भाषा' शब्दको प्रयोग गर्न दिएको निर्देशन ।

तहाँ आयोगबाट भएको कारवाही १. (ख) का लागि मात्र भएको देखिन्छ । १. (क) को सूचना सम्बन्धी प्रधानमन्त्री तथा मन्त्रीपरिषद्को कार्यालयले मिति २०७७/०३/१७ को च.नं. सु.स.वै./५१२/६३६३ मा उक्त सूचना संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयसँग सम्बन्धित देखिएको भन्ने पत्र प्राप्त भएको छ । यो पत्र सहित १. (क) मा माग गरिएको सूचना सम्बन्धीका कागजातहरू पुनरावेदनको २.१ मा सूचिकृत छ भने पुनरावेदनका साथ टाँस गरी पठाइएको उक्त मुद्दाको फाइलमा छ ।

त्यसैले उक्त मुद्दामा स्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयलाई पनि विपक्षी बनाइएको छ । २०५२ सालमा 'नेवारी भाषा' भन्ने सट्टा 'नेपाल भाषा' भनि सम्बोधन गर्नुपर्ने मन्त्रीपरिषद्को निर्णय र २०५५ सालमा तत्कालीन सूचना तथा सञ्चार मन्त्री राधाकृष्ण मैनालीद्वारा 'नेपाल भाषा' शब्दको प्रयोग गर्न दिएको निर्देशन दुई फरक सूचना भएको जानकारी गराउन चाहन्छु ।

तसर्थ मुद्दा नं ४२२ / ०७७ / ०७८ का सन्दर्भमा आयोगले पुनरावेदनको १. (ख) को सूचना दिलाउने सम्बन्धी मात्र कारवाही भएको देखिएकाले पुनरावेदनको १. (क) मा उल्लेख सूचना दिलाउपाउने कारवाही गरिपाऊँ भनि निवेदन गर्दछु ।

निवेदक,
रुक्शना कपाली

नेपाल संवत् मिति ११४२ प्वँहेला २


RD782777257NP
**Lalitpur DPO (44700)**
**Letter (RD782777257NP)**
**From:**rukshana kapali
Lalitpur, -
**To:**sanchar tatha suchana prabidhi mantralaya
Kathmandu, -
**Weight:** 28.00 Grams **Cash: Rs.**33.00
**Date:**12/20/2021 Time: 11:14 AM
**OP:**sunubohltp

श्री कार्यालय प्रमुखज्यू,
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय,
यें (काठमाडौं) ।

**विषय : सूचनाको हकको संवैधानिक अधिकार कुण्ठित नगर्न र माग गरिएको सूचना उपलब्ध गराइपाऊँ ।**

उपरोक्त सम्बन्धमा मैले यस मन्त्रालयलाई सूचना माग गर्दा उपलब्ध नगराइएको हुनाले बाध्य भएर सूचना आयोगमा पुनरावेदन दिएको सन्दर्भमा सूचना आयोगले यस मन्त्रालयलाई मिति २०७८/०४/३१ पु.च.नं २८२ को पत्र र मिति २०७८/०७/२९ मा पु.च.नं ८०६ मार्फत् दुई पटक सूचना उपलब्ध गराउन निर्देशन दिइसकेको स्मरण गराउन चाहन्छु । प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालय एवं सूचना आयोगले पनि मैले माग गरेको सूचना यसै मन्त्रालयको जिम्मेवारी रहेको ठहर गरेको छ ।

नेपालको संविधान धारा २७ प्रदत सूचनाको हक कुण्ठित नगर्न र मैले माग गरेको सूचना यथाशीघ्र उपलब्ध गराउन म यस मन्त्रालयलाई माग गर्दछु ।

यस पत्र साथ संलग्न :-

१) सूचना आयोगको मिति २०७८/०४/३१ पु.च.नं २८२ को पत्र। - पाना १
२) सूचना आयोगको मिति २०७८/०७/२९ पु.च.नं ८०६ को पत्र। - पाना १
३) माग गरिएको सूचनाको सन्दर्भाधारका लागि गोरखापत्रमा प्रकाशित समाचार । - पाना २

**निवेदक,**
रुक्शना कपाली
9808262699
rukshana.newa@gmail.com
ललितपुर महानगरपालिका वडा नं १६, ललितपुर जिल्ला ।

**बोधार्थ** : श्री सूचना आयोग, यें (काठमाडौं) ।


RD782778116NP
**Lalitpur DPO (44700)**
**Letter (RD782778116NP)**
**From:**rukshana kapali
Lalitpur, -
**To:**suchana aayog
Kathmandu, -
**Weight:** 12.00 Grams **Cash: Rs.**28.00
**Date:**12/20/2021 Time: 11:19 AM
**OP:**sunubohltp



# राष्ट्रिय सूचना आयोग

का. म. न. पा.-१०, बानेश्वर, देवीनगर





प. सं. ०७७/७८

पु. च. नं. ११५३

च. नं. ...........

मिति २०७८।०९।१९

श्रीमान् सचिवज्यू,
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय
सिंहदरबार, काठमाडौं ।

विषयः ताकेता सम्बन्धमा ।

उपर्युक्त सम्बन्धमा यस आयोगको प.सं. ०७८/८९ च. नं. २८२ मिति २०७८।०४।३१ को पत्र मार्फत तहाँ मन्त्रालयलाई सूचना उपलब्ध गराउने विषयमा निर्देशानुसार अनुरोध गरेकोमा हालका दिन सम्म पनि निज पुनरावेदकले सूचना नपाएको हुदाँ पुनरावेदकले पुनः यस आयोगमा मिति २०७८।०९।०५ गतेमा सूचना माग सहितको पुनरावेदन गरिएकोले तत् सम्बन्धमा यथाशिघ्र सूचना मागकर्तालाई सूचना उपलब्ध गराउनु हुन आदेशानुसार अनुरोध छ ।

(संजिप कुमार अधिकारी)
कानून अधिकृत

वोधार्थः

१. श्रीमान् मुख्य सचिवज्यू,
   नेपाल सरकार ।
२. श्री रुक्शना कपाली
   ल. म. पा.-१६, ललितपुर
   मो. नं. ९८०८२६२६९९

सूचना लिने दिने संस्कृतिको बिकास गरौं
सूचना नपाए उजुरी गरौं, पाए जानकारी गराऔं ।
फोन नं: ०१४४६४४१२, ०१४४९६५४४ फ्याक्स: ०१४४९६५४५, ईमेल: info@nic.gov.np वेबसाईट: www.nic.gov.np



८३ | नेपाल भाषा नामको औपचारिक पुनःस्थापना सम्बन्धी सूचनाको हकद्वारा प्राप्त मन्त्रीपरिषद्को निर्णय: रुक्शना कपाली



# राष्ट्रिय सूचना आयोग

का. म. न. पा.-१०, बानेश्वर, देवीनगर





प. सं. ०७८/७९

पु. च. नं. १५५६

च. नं. …………

मिति २०७८।१०।२०

श्री रुक्शना कपाली,
ल.म.पा. वडा नं. -१६, ललिपुर ।
मो.नम्बरः ९८०८२६२६९९

विषयः सूचनाको जानकारी सम्बन्धमा ।

उपर्युक्त सम्बन्धमा तपाईले सूचना उपलब्ध नगराएको भनी सञ्चार तथा सूचना प्रविधि मन्त्रालय सिंहदरबार, काठमाडौंलाई विपक्षी बनाई यस आयोगमा दिएको पुनरावेदनको सम्बन्धमा उक्त कार्यालयको च.नं. ७११ मिति २०७८।०९।२२ को पत्रसाथ प्राप्त भएको सूचनाको प्रतिलिपि पाना चार (४) तपाईको जानकारीको लागि पठाईएको व्यहोरा आदेशानुसार अनुरोध छ । साथै प्राप्त भएको सूचना माग अनुसारको भए आयोगलाई जानकारी गराउनु र तपाईको माग बमोजिम सूचना नभएको भए तपसिलको तीन महले फारम बुदाँ गत रुपमा भरी यस आयोगमा निवेदन गर्नु हुन अनुरोध छ ।

तपसिलः

| सुरुमा माग गरेको सूचना | प्राप्त भएको सूचना | प्राप्त हुन बाँकी सुचना |
|---|---|---|
| | | |

(संजिप कुमार अधिकारी)
कानून अधिकृत

सूचना लिने दिने संस्कृतिको बिकास गरौं
सूचना नपाए उजुरी गरौं, पाए जानकारी गराऔं।
फोन नं: ०१४४६४४१२, ०१४४९६५४४ फ्याक्स: ०१४४९६५४५, ईमेल: info@nic.gov.np वेबसाईट: www.nic.gov.np



नेपाल सरकार

# सञ्चार तथा सूचना प्रविधि मन्त्रालय

सिंहदरबार, काठमाडौँ

प्रेस तथा सूचना समन्वय शाखा



प.सं. :- ०७८/७९

च.नं. :- ७११

मिति :- २०७८/०९/२२

विषय: सूचना उपलब्ध गराइसकेको सम्बन्धमा।

श्री राष्ट्रिय सूचना आयोग

बानेश्वर, देवीनगर।

प्रस्तुत विषयमा तहाँको प.सं. ०७८/७९ पु.च.नं. ११९३ मिति २०७८।०९।१९ को "ताकेता सम्बन्धमा" विषयक पत्र प्राप्त भई व्यहोरा अवगत भयो। निज सूचना मागकर्तालाई यस मन्त्रालयबाट प्रेषित प.सं. ०७८/७९ च.नं. प्रेस-२२/३५ मिति २०७८।०५।२९ गतेको पत्रबाट निजको ठेगाना ललितपुर म.न.पा.१६ र इमेल ठेगाना rukshana.newa@gmail.com मार्फत सूचना उपलब्ध गराइसकेको विषय अवगत गराउनुका साथै निज हालसम्म सूचना लिन भौतिक रुपले यस मन्त्रालयमा उपस्थित नभएको व्यहोरा समेत जानकारीका लागि अनुरोध छ। निज सूचना मागकर्तालाई पठाइएको कागजात यसैसाथ संलग्न छ।

राष्ट्रिय सूचना आयोग
दर्ता नं.:- २६३८
मिति :- २०७८।०९।२४

प्रमाणित डिजिटल हस्ताक्षर
डिजिटल हस्ताक्षर गर्ने व्यक्ति
Kumar Thapa
kumar.thapa@nepal.gov.np

.....................................

(कुमार थापा)

शाखा अधिकृत

बोधार्थ:

श्री प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय, मन्त्रिपरिषद् सचिवालय

सिंहदरबार, काठमाडौँ।



नेपाल सरकार
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय
(प्रेस तथा सूचना समन्वय शाखा)

सिंहदरवार, काठमाडौं

प. सं. ०७८/७९
च.नं. प्रेस-२२/३५

मितिः-२०७८।०५।२९

विषय :- सूचना सम्वन्धमा ।

श्री रूक्शना कपाली,
ललितपुर महानगरपलिका १६, ललितपुर।

प्रस्तुत विषयमा तपाई श्री रूक्शना कपालीले सूचनाको हक अन्तर्गत नेपाल भाषाको विषयमा भएको मन्त्रिपरिषद् बैठकको निर्णय सम्बन्धी सूचना माग गर्दै मिति २०७७।१०।२८ गते निवेदन पेश गर्नुभएकोले माग बमोजिमको नेपाल सरकार मन्त्रिपरिषद्को मिति २०५२।५।२२ को निर्णय प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयको च.नं. मं.बै.।३२१।१३३५ को मिति २०७८।५।२७ को पत्र मार्फत प्राप्त भएकोले सो को छाँयाप्रति यसैसाथ संलग्न गरी पठाइएको व्यहोरा आदेशानुसार अनुरोध छ।

(रेजिना कोइराला)
शाखा अधिकृत

बोधार्थः-
श्री राष्ट्रिय सूचना आयोग
देवीनगर, काठमाण्डौं।

ट्याक्स नं: ०१-४२११७२९,०१-४२११६१०

प.सं.नं. २६८
५/१९

नेपाल सरकार

# प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय

सिंहदरबार, काठमाडौं
नेपाल ।

प.सं./३२१/१३३५

मिति: २०७८/५/२७

श्री प्रेस तथा सूचना

श्रीमान् सचिवज्यू
सञ्चार तथा सूचना प्रविधि मन्त्रालय,
सिंहदरबार।

विषय: नेपाल सरकार, मन्त्रिपरिषद्को निर्णयको प्रतिलिपि पठाइएको सम्बन्धमा ।

तहाँ मन्त्रालयको च.नं. प्रेस-२२/११ मिति २०७८/५/१५ को पत्रबमोजिम माग भइआएको नेपाल सरकार, मन्त्रिपरिषद्को निर्णयको छायाप्रति यसै पत्रसाथ संलग्न राखी पठाइएको व्यहोरा आदेशानुसार अनुरोध गर्दछु ।

(बुद्धबहादुर गुरुङ)
सहसचिव

टेलिफोन : ४२११०६३, ४२११०२१, ४२११०७७, ४२११०६६
फ्याक्स : ४२११०६५, ४२११०८६, ४२११०३८, ४२११०२१, ४२११०४७, पो.ब.नं. : २३३१२, काठमाडौं, नेपाल

श्री ५ को सरकार

# मन्त्रिपरिषद् सचिवालय

(......... शाखा)

श्री ५ को सरकार मन्त्रिपरिषद् सचिवालय

२४६/०५२

सिंहदरबार, काठमाडौं,
नेपाल ।

मिति २०५२।३।२३

विषयः–

श्री सचिव,
सूचना तथा संचार मन्त्रालय ।

कार्यक्रम संचालन गर्ने विषय मं.प.बै.सं. ४०।०५२ को मन्त्रिपरिषद्को बैठकमा पेश हुँदा, त्यसमा श्री ५ को सरकार (कार्य सम्पादन) नियमावली, २०४७ को नियम २६ (अनुसूची १ खण्ड क) अनुसार श्री ५ को सरकारले देहायमा लेखिएबमोजिम गर्ने निर्णय गरेकोले सो बमोजिम कार्यान्वयन हुन अनुरोध गरेको छु–

<u>श्री ५ को सरकारको निर्णय :–</u>

"संचार माध्यमबाट विभिन्न भाषामा कार्यक्रम संचालन गर्ने क्रममा "नेवारी भाषा" भन्ने शब्दको सट्टा " नेपाल भाषा " भन्ने गर्ने ।"

( ईश्वरप्रसाद उपाध्याय )
मुख्य सचिव

 नेपाल भाषा नामको औपचारिक पुनःस्थापना सम्बन्धी सूचनाको हकद्वारा प्राप्त मन्त्रीपरिषद्को निर्णय : रुक्शना कपाली